॥ श्रीहरिः ॥

2077▲

# असल बन

( अच्छे बनो—नेपाली )




स्वामी रामसुखदास

॥ श्रीहरिः ॥ **2077**

# असल बन

( अच्छे बनो—नेपाली )

> त्वमेव माता च पिता त्वमेव
> त्वमेव बन्धुश्च सखा त्वमेव।
> त्वमेव विद्या द्रविणं त्वमेव
> त्वमेव सर्वं मम देवदेव॥


लेखक—

**स्वामी रामसुखदास**

नेपाली अनुवादक—**प्रो० डॉ० विष्णुराज आत्रेय**



2077 Achhe Bano_Nepali_Section_1_Front

॥ श्रीहरि ॥

# निवेदन

परमश्रद्धेय स्वामी श्रीरामसुखदासजी महाराज जहाँ जानुहुन्छ, त्यहाँ उहाँले प्रतिदिन बिहान ठीक पाँच बजेदेखि गीतोक्त स्तुति र गीतापाठपछि प्रववचन गर्ने गर्नुहुन्छ। यी प्रवचनहरू भगवदभिलाषी साधकहरूका लागि निकै उपयोगी हुने गरेका छन्। तिनैमध्ये केही प्रवचनको सङ्ग्रह प्रस्तुत पुस्तकमा प्रकाशित गरिएको छ। यी प्रवचन जोधपुरमा वि०सं० २०४३ (सन् १९८६) मा भएको चातुर्मास्य सत्सङ्ग-कार्यक्रमबाट लिइएका हुन्।

'मनुष्यमात्र भगवत्प्राप्तिको अधिकारी हो। उसले प्रत्येक परिस्थितिमा भगवान्‌लाई प्राप्त गर्न सक्छ' यही यी प्रवचनहरूको सार हो। यस विषयलाई राम्ररी बुझ्नका लागि पाठकले यस पुस्तकको गम्भीरतापूर्वक अध्ययन-मनन गर्नुपर्दछ।

**—विनीत**

**प्रकाशक**

॥ श्रीहरिः ॥

# विषय-सूची

॥ श्रीहरिः ॥

# असल बन

यदि मनुष्यले आफ्नो वस्तु (परमात्मा) लाई मात्र आफ्नो मान्दछ र अर्काको वस्तु (शरीर र संसार) लाई आफ्नो मान्दैन भने त त्यो मुक्त भइहाल्छ। यसमा अलिकति पनि सन्देह छैन। गीतामा जहाँ गुणातीत महापुरुषको लक्षण गरिएको छ, त्यहाँ **'समदुःखसुखस्वस्थः'** (१४। २४) लेखिएको छ। जो व्यक्ति आफूभित्र आफ्नै स्थानमा स्थित रहन्छ, त्यो सुख र दुःख दुवैमा समान रहन्छ र मुक्त हुन्छ। त्यसले अर्काबाट आशा राख्नुभनेको उसभित्रको ठूलो कायरता हो, साह्रै ठूलो निर्बलता हो। यो कायरता र निर्बलता पनि उसले आफैँले उब्जाएको हो। मूलतः त्यो कुरा छैन।

तिमी आफ्नो ठाउँमै बस, आफ्नो वस्तुलाई मात्र आफ्नो ठान, अर्काको वस्तुलाई आफ्नो नठान। यसमा निर्बलता र कठिनता के छ र?

अरु मानिसले मलाई के भन्लान्? के ठान्लान्? यस्तो खालको डर ठूलो अनर्थकारी हुन्छ। यस्तो डरलाई त्यागेर व्यक्ति निर्धक्क हुनुपर्दछ। अरुले खराब भन्दा हामी डराउँछौँ भन्दैमा तिनले हामीलाई खराब भन्न छोड्छन् र? उनीहरू त आफ्नो मनमा जे लाग्यो, त्यही भन्छन्। हामी डरायौँ भने पनि त्यस्तै भन्छन्, हामी डराएनौँ भने पनि त्यस्तै भन्छन्। उनका मनमा जस्तो आयो त्यस्तै भन्छन्। के हामी डरायौँ भन्दैमा उनीहरूहामीलाई राम्रो भन्न थाल्लान्? यस्तो त सम्भवै छैन। अरुले के भन्छन्? भन्ने कुराको ख्यालै नगरी आफ्नै सिद्धान्तमा अडिग बस। आफ्ना काममा लागिराख। यो धेरै फाइदाजनक कुरा हो।

हिँजोअस्तिकै कुरा होला! एउटा प्रसङ्ग चल्दा मैले भनेँ—तिमी निःशङ्क र निर्भय बन्नका लागि एउटै कुरा छ कि यदि कसैले तिमीलाई खराब भन्छ भने तिमी आफ्नै दृष्टिले आफूलाई हेर! कतै मैले गल्ती त गरिरहेको छैन? मैले नीतिविरुद्ध कुनै काम त गरिनँ? यसरी तिमी

आफूमा जति विश्वास गर्न सक्छौ र दृढतापूर्वक जतिसम्म रहन सक्छौ, त्यति सम्म बस। अनि त तिमीभित्रका सबै खाले डरहरू हराउनेछन्।

तिमीले कुनै त्रुटि नै गरेका छैनौ भने फेरि केको डर? आफ्नो आचरणमा, आफ्ना भावमा तिमी आफैँ दृढ बन, यसबाट ठूलो शक्ति प्राप्त हुन्छ। तिनीहरुलाई मैले यो पनि भनें कि मैले त यसलाई आफैँ अनुभव गरेर हेरेको छु। तिमी आफू पनि अनुभव गरेर हेर। यदि हामी आफू ठीक छौँ र सच्चा छौँ भने केको डर?

जब मानिस आफैँले आफ्नो विश्वास गर्दैन, अनि कुरा बिग्रिन्छ। तर जब हामी आफ्ना ठाउँमा ठीक रहन्छौँ, हाम्रो नियत ठीक छ, हाम्रा काम ठीक छन्, हाम्रा विचार र हाम्रा भाव ठीक छन् भने तिमी अर्काले मलाई राम्रो ठानोस् भन्ने अलिकति पनि आशा नराख। अर्काले मलाई राम्रो भनोस् भन्ने इच्छा नगर। अर्काले नराम्रो ठान्ला भनेर नडराऊ। हामीलाई अरुले जति नै नराम्रो ठानून्, हामी जस्ता छौँ, त्यस्तै रहन्छौँ। यदि हामी असल छैनौँ र अरुले हामीलाई राम्रो भने रे! के यतिले नै हामी असल भएको ठहरिन्छ र?

श्रोता—आफ्नो गल्ती आफैले देख्न सकिएन भने नि?

स्वामीजी—आफ्नो गल्ती आफूले देख्न नसक्नुका कारण छन्। ती हुन्—स्वार्थ र अभिमान। स्वार्थ र अभिमानको ढकनीले हामीलाई यसरी घपक्क ढाकिदिन्छ कि त्यस अँध्यारोमा आफ्ना त्रुटिहरू आफले देखिँदैंन। अतः हामी स्वार्थी नबनौँ। अभिमान नगरौँ। स्वार्थ र अभिमान त्याग गर्नाले हामीले धेरै उज्यालो भेट्छौँ। अनि त आफ्ना त्रुटिहरू देखिन थाल्छन्।

एउटा अर्को उपाय यो पनि छ—आफूभित्र अवगुण देखिनासाथ तिमी त्यसलाई हटाउँदै जाऊ। यसो गरिरहदाँ आफूले नदेखिने अवगुण पनि देखिन थाल्नेछन्। यसरी जुन अवगुणहरूलाई तिमी सजिलैसँग त्याग्न-पन्छाउन सक्तछौ, त्यसलाई त्याग्यौ भने जुनलाई त्याग्न गाह्रो लाग्दथ्यो, त्यसलाई पनि सजिलैसँग त्याग्न सकिन्छ र अघि देख्न

नसकिएका आफ्ना अवगुणहरू पनि देखिन थाल्दछन्। आफ्ना अवगुण पन्छाउने यो साह्रै ठूलो रामबाण उपाय हो। तिमी आफैँ एकचोटि गरेर हेर।

सत्सङ्का माध्यमले तिमीलाई आफ्ना जुनजुन कमी कमजोरीहरूको ज्ञान हुन्छ र तीमध्ये जसलाई सजिलैसँग हटाउन सकिन्छ, त्यसलाई हटाउँदै पन्छाउँदै जाऊ। उदाहरणका लागि एकछिन कल्पना गर कि मेरो झुटो बोल्ने स्वभाव छ। तर, त्यस झुटोले मेरो सांसारिक व्यवहार वा रुपियाँ पैसाको लेनदेनसँग कुनै सम्बन्ध छैन भने त्यस्तो झुटो नबोलौँ। हामी सामान्य दैनिक व्यवहारमा त्यसै पनि झुटो बोल्ने गर्दछौँ। जस्तै बिहानी पख कसैलाई निद्राबाट बिउँझाउनु पऱ्यो भने हामी अनायासै झुटो बोलिदिन्छौँ—

'ए भाइ? उठ! मध्याह्न भइसक्यो। उठ्दैनौ?'

यदि हामीले माथिको झुटो वाक्यको ठाउँमा यदि 'सूर्योदय हुँदैछ, उठ!' भनेर साँचो बोल्दा पनि के पो नासिने थियो र? यसरी अनावश्यक-रूपमा सानोतिनो कुरामा तिमीले झुटो बोल्न थाल्यौ भने तिम्रो बानी बिग्रिन्छ।

जुन अवगुण स्पष्टै देखिन्छ र जसलाई हटाउन कुनै खास परिश्रम गर्नुपर्दैन तथा त्यसबाट तिम्रो कुनै किसिमको हानि छैन, त्यसलाई फालिदियौ भने तिमीभित्रका अरु बाँकी अवगुणहरू पनि देखिन थाल्नेछन्। यदि तिमीले आफूभित्र त्यस्तो कुनै अवगुण देखेनौ भने पनि त्यसको चिन्ता नगर। नदेखिने अवगुणलाई कायम गर्ने प्रयास पनि नगर, किनभने स्वरूपमा कुनै अवगुण छैन। आफ्ना अवगुण र आफ्ना कमीहरूलाई मैले आफूभित्र राख्नु छैन भन्ने तिम्रो नियत हुनुपर्दछ।

तिमीले आफूलाई नै सुधार्न सकेनौ त अरुलाई कसरी सुधारौला! अझ साँचै भन्ने हो भने आफ्नो सुधार गरेपनि अर्काको सुधार कसैले गर्न सक्दैन। ठूलाठूला महात्मा छन्, आचार्यहरू छन्, तिनले पनि अर्काको सुधार गर्न सकेनन्। अर्कोलाई आफूजस्तो बनाउन सकेनन्। मेरो यहाँ कसैमाथि आक्षेप गर्ने उद्देश्य होइन, तर बडो आदरभावका साथ नाम

लिन्छु—के शङ्कराचार्यले आफूजस्तो अर्को शङ्कराचार्य बनाउनुभयो ? के रामानुजाचार्यले आफूजस्तै अर्का रामानुजाचार्य बनाउनुभयो ? वल्लभाचार्यले पनि अर्का वल्लभाचार्य बनाउनुभयो र ?

शिष्यले चाहेमा ऊ गुरुभन्दा पनि महान् बन्न सक्दछ, तर गुरुले शिष्यलाई त्यस्तो बनाउन सक्दैनन्। यस कुरालाई तिमीले राम्रोसँग विचार गर। आफूलाई श्रेष्ठ बनाउनु त आफ्नै हातको कुरा भयो, तर अर्कोलाई महान् बनाउनु आफ्नो हातको कुरा होइन।

जति पनि महान् गुरुहरू भएका छन्, तिनको प्रयास मेरो शिष्य मभन्दा पनि गुणी होओस् भन्ने रहन्छ। तिनीहरू आफ्ना शिष्यहरूलाई तल्लो तहमा राख्न चाहँदैनन्। जुन गुरु आफ्ना शिष्यलाई आफ्ना अधीनमा राख्न चाहन्छन्, वास्तवमा ती त गुरु भनिन लायक पनि छैनन्। गुरुले त गुरु नै बनाउँछ, चेला बनाउँदैन। शास्त्रमा भनिएको छ—

**सर्वतो जयमन्विच्छेत् पुत्रादिच्छेत् पराभवम्।**

अर्थात् मनुष्य अरु सबैमाथि आफ्नो विजय चाहोस्, तर छोरादेखि आफ्नो पराजय चाहोस्।

प्रत्येक इमानदार बाबुले मेरो छोरो मभन्दा पनि ठूलो बनोस् भन्ने चाहना राख्नुपर्दछ। त्यसैगरी, प्रत्येक ईमानदार गुरुले पनि मेरो शिष्य मभन्दा पनि तेजिलो फुर्तिलो होस् भन्ने चाहना गर्नुपर्दछ। परन्तु यस्तो चाहना मात्रले त्यो तेजिलो र फुर्तिलो बन्न सक्दैन। तर, पुत्र वा शिष्य स्वयम् आफैँले चाहेमा ऊ त्यस्तो बन्न सक्दछ। यो वास्तविक कुरा हो।

खेडापा भन्ने ठाउँमा एकजना श्रीरामदासजी नामका सन्त थिए। उनका शिष्य दयालजी महाराज भए। त्यहाँ धेरै साधुहरू यस्ता छन्, जो सन्त श्रीदयालजीलाई जति सम्झन्छन्, उति श्रीरामदासजीलाई सझिन्नन्। खेडापाको मात्र होइन, अरु ठाउँका साधुहरू पनि सन्त श्रीदयालजीका करुणासागर कृतिको पाठ गर्दछन्।

अब तिमी विचार गर। कति विलक्षण कुरा छ यो। यदि तिमीले आफूभित्रका अवगुणहरू खोजेर पत्तो लाएर तिनलाई क्रमशः फाल्दै-

हटाउँदै गयौ भने तिमी आफ्ना गुरुभन्दा पनि महान् बन्दछौ। यस कुरामा कत्ति पनि सन्देह छैन। गुरुहरूका मनमा पनि मेरो शिष्य मभन्दा पनि श्रेष्ठ र मान्य होस् भन्ने भावना हुने गर्दछ।

जो व्यक्ति राम्रा उपदेशक वा उच्चकोटिका व्याख्यानदाता भएका छन् र साँचो अर्थमा गुरु हुन सकेका छन्, उनीहरु मेरो शिष्य सबैभन्दा श्रेष्ठ बनोस्, मनमा यही नै भावना राख्दछन्। मैले यस्ता गुरुजनहरूलाई आफैले देखेको छु।

हाम्रा एकजना विद्यागुरु नाम भएका गुरुजी हुनुहुन्थ्यो। उहाँको हामी छात्रहरुप्रति यिनीहरु श्रेष्ठ बनून् भन्ने भावना हुन्थ्यो। हामी विद्यार्थीहरू रातीमा दीयो अगाडि राखेर पढ्ने गर्दथ्यौँ। कदाचित् हामीलाई निद्रा लाग्न थाल्यो भने उहाँले झ्यालबाट देखिहाल्नुहुन्थ्यो र भन्नुहुन्थ्यो—हेर! यो के गरेको? अनि त हामी विद्यार्थीका मनमा सधैँभरि यही नै डर हुने गर्दथ्यो कि गुरुले हामीलाई हेरिराख्नुभएको होला? उहाँ विस्तारै केही नबोलिकन नै त्यहाँ आएर सोध्नुहुन्थ्यो? त्यहाँ किन उभिएको थिइस्? यस्तो किन गर्दै थिइस? उहाँमा विद्यार्थीहरूलाई पढाउने र उनीहरूलाई योग्य बनाउने ठूलो संलग्नता थियो। उहाँले मलाई धेरै पल्ट भन्नुभएको थियो—कहीँ कतै कुनै छलफलमा वा शास्त्रीय समस्या आइपरेमा हाम्रो शिष्य शुकदेव त्यहाँ निर्णायक बन्न सकोस्। म उसलाई यस्तो देख्न चाहन्छु। उहाँले यो पनि भन्नुहुन्थ्यो—मैले जस्तो चाहन्थे, त्यस्तो बनाउन सकिनँ।

अत: जो असल गुरुजन हुन्छन्, ती यस्तै हुन्छन्। बाबु-आमा पनि यस्तै हुन्छन्। तिनीहरू पनि आफ्नो छोरो वा चेलोलाई मभन्दा पनि जान्ने-सुन्ने होस् भन्ने चाहन्छन्, तर तिनीहरू त्यस्तो बनाउन सक्दैनन्। यदि शिष्य वा पुत्रले चाह्यो भने त ऊ आफू उनीहरूभन्दा असल बन्न सक्दछ। त्यसै हुनाले गीतामा भनिएको छ—

**उद्धरेदात्मनात्मानं नात्मानमवसादयेत्।**
**आत्मैव ह्यात्मनो बन्धुरात्मैव रिपुरात्मनः॥**

(६। ५)

अर्थात् आफ्नो उद्धार आफैँ गर्नुपर्दछ। आफैँले आफ्नो पतन वा विनाश गर्नुहुँदैन। व्यक्ति आफ्नो बन्धु स्वयम् आफैँ हो। आफ्नो शत्रु पनि ऊ आफू नै हो। त्यसैभएर तिमी आफ्नो ठाउँमा ठीकसँग रह्यौ भने आफैँ श्रेष्ठ बन्दछौ। यसमा कुनै सन्देह छैन।

मानिसहरू मलाई असल मात्रै भनून् भन्ने आशा नगर। कसैले पनि मलाई नराम्रो नभनिदेओस् भन्ने डरले तिम्रो पतन गराउँछ। यसरी डरायौ भने त तिमी कहिल्यै माथि उठ्न सक्ने छैनौ। जो अर्काले दिएको प्रमाणपत्रका आधारमा आफू असल र कमसल भएको निर्णय गर्दछ, त्यो कसरी माथि उठ्न सक्ला! फेरि भएभरिका सबैले तिमीलाई असल छ मात्रै भनून् भन्छौ भने यो त तिम्रो हातको कुरो होइन। मानिसहरू त जुन अवगुण तिमीमा छैन, त्यो अवगुण पनि तिमीमा छ भन्छन्—
'**अवाच्यवादाँश्च बहून् वदिष्यन्ति तवाहिताः।**' (गीता २।३६)

मानिस तिमीलाई नभन्ने कुरा पनि भनिदिन्छन्। तिनलाई तिमी त्यस्ता छैनौ भन्ने थाहा छ, तै पनि तिमीलाई रिसाउने र दुःखी हुने गराउन उनीहरू त्यस्ता कुरा गर्छन्।

हिजोआज मत प्राप्त गर्न जो मानिस चुनावमा उम्मेदवार हुन्छ, मेरा विपक्षमा उभिएको प्रत्याशी मभन्दा श्रेष्ठ छ भन्ने कुरा जान्दाजान्दै पनि त्यसले उसको निन्दा नै गर्दछ र भन्छ—त्यो असल छैन, म असल छु।

त्यसैहुनाले तिमी अरुको भनाइमा नलागेर आफू असल बन। अरुले मलाई राम्रो भनून् भन्ने आशा नगर। उनीहरु त तिमी योग्य छौ र असल छौ भन्ने जान्दाजान्दै पनि तिमीलाई राम्रो भन्दैनन्, खराबै भन्छन्। तिमीलाई राम्रो भन्ने सामर्थ्य तिनमा छैन।

तिमीभने उनीहरुले मलाई राम्रो भनून् भनेर पर्खिरहेका छौ। यो तिम्रो कत्रो भूल हो! अरुबाट राम्रो भनिने इच्छा नराख। असल कहलिने आशा नगर, आफैँ असल बन।



# वास्तविक ठूलोपन

उत्पन्न हुने र नाश हुने कुराका भरमा तिमी आफूभित्र मपाई वा हीनताबोध गर्छौ—यो तिम्रो साह्रै ठूलो भूल हो। कुनै म धनी छु भनेर आफूलाई ठूलो मान्दछ, कुनै मेरो ठूलो महल छ भनेर आफूलाई ठूलो मान्दछ। कुनै मैले राम्रा लुगा लगाएको छु भनेर आफूलाई ठूलो ठान्दछ र कुनैले ठूलो पद प्राप्त गरेको हुनाले आफूलाई महान् ठान्दछ भने कुनैले यी कुराहरू नपाउनाले आफूलाई सानो ठान्दछ। यो साह्रै ठूलो भूल हो।

तिमी स्वयम् परमात्माका अंश हौ, चेतन हौ। तै पनि मामुली जड वस्तुलाई लिएर आफूलाई सानो र ठूलो ठान्छौ। यो साह्रै तुच्छ विचार हो। जड वस्तुलाई लिएर आफूलाई ठूलो ठान्नु पनि तुच्छता हो। यसलाई लिएर आफूलाई सानो ठान्नु पनि तुच्छता हो। तिमी त यस्ता सांसारिक जडवस्तुका उत्पादक स्वयम् हौ। यिनका उपभोक्ता पनि हौ। यस्ता वस्तुको आदि-अन्त्य पनि तिमीलाई थाहा छ। तैपनि इनका नोकर किन बन्दछौ तिमी? धन त आउँछ, जान्छ। श्रोता भेटिन्छन्, छुट्छन्। यसरी जुन कुराको आदि अन्त्य तिमीलाई थाहा छ, त्यो हुदाँ मपाईं गर्नु र त्यो नहुँदा आफूलाई तुच्छ सम्झिनु कत्रो गल्ती हो? एकै छिन विचार गर्दा यो कुरा हामीलाई खुलस्त हुन्छ—

पद पाउँदा मात्र हामी ठूला भयौँ भने हामी त सानै रह्यौँ। त्यो पद पो हामीभन्दा ठूलो भयो। रुपियाँ-पैसा साथमा हुँदा मात्र हामी आफूलाई ठूला भयौँ भन्ने ठान्छौँ भने त रुपियाँ नै पो हामीभन्दा ठूलो भयो, हामी ठूला भएनौँ। अत: आउने र जाने यो नश्वर सांसारिक वस्तुका भरमा हामी आफू ठूला र साना हुदैँनौँ भन्ने कुरा हामी आजबाट होइन, अहिलेबाटै मान्न थालौँ।

तिमी स्वयम् धेरै ठूला छौ। त्यसै त तिमी भगवान्का अंश हौ। अझ भगवान्का भक्तिमा पनि लाग्यौ भने त तिमी स्वयम् भगवान्को मुकुटका मणि हौ। भगवान् भन्नुहुन्छ—

**मै तो हूँ भक्तन का दास, भगत मेरे मुकुटमणि।**

जसलाई भगवान् स्वयंले मुकुटमणि भन्नुहुन्छ, त्यो त तिमी नै हौ।

भक्त कहिले बन्दछ? आफूभित्रको जडता र दासत्व हट्यो कि त व्यक्ति भक्त भयो। यसैहुनाले अब म उत्पत्ति र विनाशशाली तुच्छ वस्तुलाई लिएर आफूलाई ठूलो र सानो मान्दिनँ भन्ने कुरा तिमी अहिले नै स्वीकार

गर। तिमी आवश्यकता भएका सांसारिक वस्तुको आफैँ उत्पादन र उपार्जन गर, उपयोग पनि गर, तर यस्ता मामुली वस्तुबाट आफूलाई ठूलो र सानो नठान। यसो गर्नु तिम्रो भूल हुन्छ।

अब भन त! यो कुरा मात्र तिमीलाई कुनै अप्ठ्यारो छ र? यदि छैन भने अहिल्यै भर्खरैदेखि यो कुरा मान। यसमा विलम्ब गर्ने कामै छैन। यसका लागि तिमीले कुनै तयारी गर्नुपर्ने, कुनै विद्वता आर्जन गर्नुपर्ने, कुनै बल खर्च गर्नुपर्ने र कुनै योग्यताको उपार्जन गर्नुपर्ने कुरा बिलकुलै छैन। अतः यस्ता तुच्छ र जडवस्तुका भरमा म आफूलाई ठूलो मान्दिनँ भन्ने कुरा तिमी अहिले भर्खरै स्वीकार गर। यस्ता तुच्छ कुराका भरमा आफूलाई महान् ठान्नु ठूलो पराधीनता हो। पराधीनताले व्यक्तिलाई सपनामा पनि सुख मिल्दैन—

**पराधीन सपनेहुँ सुख नाहीं।** (मानस बाल. १०२।३)

हामी त भगवान्का हौं र भगवान् हाम्रा हुन्। यस्तो भावना गर्‍यौ भने तिमी वास्तवमा महान् बन्ने छौ।

**ईश्वर अंस जीव अविनाशी। चेतन अमल सहज सुखरासी॥**

(मानस, उत्तर० ११७।१)

मानिस आफू प्रकृतिले नै सुखको खानी हो। तै पनि ऊ स्वयं दुःखी कहिले हुन्छ? जहिले उसले नाशवान् वस्तुको अधीनता स्वीकार गर्दछ। नत्र भने त्यो दुःखी हुनै सक्दैन। तिमी स्वयम् आफू दुःख चाहदैनौ, तर दुःखका सामग्रीहरू भने बटुल्छौ। दुःखी हुन चाहँदैनौ तर नाशवान् वस्तुको पराधीनता स्वीकार गर्दछौ। पराधीनतामा सुख छँदै छैन, सपनामा पनि छैन।

श्रोता—जसमा गुण हुन्छ, तिनीसँग धेरै मानिस पुग्दछन्?

गुण पनि त मानिसको आफ्नो स्वरूप होइन। गुण पनि त उसले बाहिरबाटै आर्जन गरेको हो। गुण भएन भने मानिस उसका नजिक जाँदैनन्। अब तिमी विचार गर, अरु मानिस आफूकहाँ आउँदैमा त्यो ठूलो व्यक्ति कसरी भयो? यदि अरु मानिस उसकहाँ जाँदैमा त्यो मानिस महान् बनेको हो भने त त्यो ठूलो हुनु त पराधीन नै भयो। मानिस उसका सामु गए भने त्यो ठूलो भयो, गएनन् भने सानो! यो त पराधीनता पो भयो। ठुल्याई कसरी भयो त!

तिमी कुनै गुण भएको हुनाले आफूलाई ठूलो मान्दछौ। विद्या पढेको हुनाले आफूलाई ठूलो ठान्दछौ। ठूलो पद वा ओहोदामा बसेको हुनाले आफूलाई ठूलो ठान्छौ, अथवा अरुले सेवा-सत्कार गरे भने आफूलाई ठूलो ठान्छौ भने यो सबै पराधीनता हो। कुनै व्यक्ति आफूकहाँ आओस् वा न आओस्! आफूसँग गुण होस् वा नहोस्! आफूलाई कसैले राम्रो मानून् अथवा नराम्रो मानून्! त्योसँग तिम्रो के सरोकार? तिमी त जस्ता थियौ, त्यस्तै रहन्छौ।

तिमीले मलाई ठूलो मान्यौ भन्दैमा म ठूलो हुन्छु र? अथवा तिमीले मलाई सानो ठानेकै भरमा म सानो हुन्छु र? जो अरुले ठूलो वा सानो भनिदिएका भरमा आफूलाई सानो वा ठूलो ठान्दछ, त्यो कहिल्यै ठूलो बन्न सक्छ र! सपनामा पनि सक्दैन।

जो अरु वस्तुका अधीनमा रहेर आफूलाई ठूलो भएको ठान्दछ, त्यो कसरी सुखी हुन सक्दछ? उसले त झन् ठूलो दासत्वलाई पो स्वीकार गऱ्यो। रुपियाँ-पैसा थुपाऱ्यो, कागतका खोस्टाहरू थुपाऱ्यो, हीरा जवाहरातहरू जम्मा गऱ्यो, टल्किने पत्थरका टुक्राहरू जम्मा गऱ्यो, अनि मान्यो आफूलाई ठूलो मानिस! कसरी भयो त्यो ठूलो मानिस? तिमीले धन कमाएका छौ भने त्यसको सदुपयोग गर। त्यसलाई सकेसम्म राम्रो काममा लगाऊ। धन आर्जन भयो भन्दैमा तिमी आफूलाई ठूलो मानिस भएको भन्ने ठान्छौ भने त त्यो तिम्रो बेइज्जत नै भयो।

भगवान् सांसारिक पदार्थजस्तो आउने र जाने गर्दैनन्। उनी त स्थिर छन्। तिमीले उनलाई आफ्नो मान्यौ भने तिमी असली ठूलो व्यक्ति बन्दछौ। वास्तविकरूपमा तिमी महान् व्यक्ति बन्यौ भने तिमीमा म ठूलो छु भन्ने अभिमान पनि हुँदैन र कसैले मलाई सानो भन्ला कि भन्ने कुराको डर पनि हुँदैन।

तिमीलाई कसैले सानो मान्छ भने यसमा तिम्रो के हानि छ र ठूलो मान्छे भनेमा पनि के लाभ?

तिमी जसका हौ र जो तिम्रो हो, त्यस परमात्मासँग तिम्रो सम्बन्ध राम्रो रहन सक्यो भने तिमी वास्तवमै ठूला हुन्छौ। अनि त तिमीभित्र सानो र ठूलोको हीनताभाव र अभिमान केही हुँदैन। तर, तिमी अरु

बाहिरी वस्तुका भरमा आफूलाई ठूलो वा सानो भएको ठान्दछौ भने तिमीभित्रको अभिमान र हीनताबोध कहिल्यै पनि जाँदैन।

आउने र जाने नाशवान् वस्तुका आधारमा आफूलाई सानो र ठूलो ठान्नु नै त बन्धन हो। बन्धन भन्ने कुनै चारखुट्टे पशु त होइन नि! घाँटीको दाम्लो फुक्यो कि मुक्त भयो! अर्काका भरमा तिमीले आफूलाई सानो र ठूलो नगराऊ। भन त अब मुक्त भयौ कि भएनौ? स्वाधीन भयौ कि भएनौ?

श्रोता—यो कुरा ठीक हो स्वामीजी!

स्वामीजी—ठीक हो भने हामी पराधीन किन हुने? त्यसोभए अहिल्यैदेखि मैले आफूलाई धनले ठूलो भएको ठान्ने छैन। पदले पनि ठूलो भएको मान्ने छैन। कसैले मेरो आदर गऱ्यो भन्दैमा पनि म आफूलाई ठूलो मानिस भएको ठान्ने छैन। कसैले मेरो अनादर गऱ्यो भने पनि मैले आफूलाई सानो भएको मान्ने छैन। मलाई मानिसहरू राम्रो ठानून् भन्ने कुराको वास्ता छैन। यो कुरा तिमी मान्न सक्छौ कि सक्दैनौ?

श्रोता—मान्न सक्छु।

स्वामीजी—त्यसोभए ढिलो किन गर्छौ? कसलाई पर्खिन्छौ? कुन परिस्थितिलाई पर्खिन्छौ? कसको बल पर्खिन्छौ? कुन समयलाई पर्खिन्छौ? कसको सहयोग खोज्दै छौ? कसको उपदेश पर्खेका छौ? कसको बाटो हेरेका छौ? उत्पन्न र विनष्ट हुने तुच्छ कुराबाट आफूलाई सानो ठूलो ठान्नेछैन भनेर अहिल्यैदेखि मान। भगवान्ले भन्नुभएको छ—

**आगमापायिनोऽनित्यास्तांस्तितिक्षस्व भारत?** (गीता २।१४)

अर्थात् जो उत्पन्न र विनाश हुने वस्तु छन्, ती सबैलाई सहन गर। यहाँ सहनुको अर्थ हो—तिनको हुनु र नहुनुको असर आफूमा नपरोस्। तिनको प्रभाव आफूमा परेन भने तिमीलाई यति शान्ति र यति आनन्दको अनुभव हुनेछ कि त्यसको कुनै लेखाजोखा छैन। तिमी आफै गरेर हेर। यो कुरा सत्य हो। म तिमीलाई छल्न वा धोकादिन चाहन्न। त्यसबेला तिमीलाई वास्तवमा हिलोमा गडेको व्यक्तिलाई बाहिर ओबानोमा निस्कँदाको जस्तो आनन्द हुनेछ।



# सेवा कसरी गर्ने?

श्रोता—सेवा गर्नका लागि मसँग न धन छ, न बल छ, न बुद्धि छ, न योग्यता छ, न त सामर्थ्य नै छ। यसका लागि कुनै पनि कुरा मसँग छैन। तै पनि म सेवा गर्न चाहन्छु, कसरी गरौँ?

स्वामीजी—साह्रै राम्रो प्रश्न गऱ्यौ। यसको उत्तर पनि नराम्रो छैन। ध्यानपूर्वक सुन। सेवा गर्नुको अर्थ हो—अर्काको कल्याण र प्रसन्नता। अहिले उसको हृदय प्रसन्न होस् र भविष्यमा उसको कल्याण होस्। यस- बाहेकको सेवा अरु के नै हुन्छ र?

श्रोता—यदि मसँग कुनै सामर्थ्य नै छैन भने अर्कालाई कसरी खुसी पारौँ?

स्वामीजी—यसका लागि तिमीलाई म एउटा साह्रै राम्रो कुरा सुनाउँछु। एउटा धनी मानिस छ। उसलाई व्यापारमा घाटा लाग्यो। कुनै डरलाग्दो रोग लाग्यो। त्यसको छोरा मऱ्यो। यस्तो अवस्थामा उसको दुःखमा सहानुभूति प्रदर्शन गर्दै तिमीले त्यसलाई भन—

तपाईंका छोरा बिते, साह्रै नराम्रो भयो। तपाइँलाई व्यापारमा घाटा लाग्यो। साह्रै दुःखलाग्दो कुरा भयो। यसरी उसको दुःखमा तिमी हृदयले नै सम्मिलित भइदेऊ। त्यो मानिस प्रसन्न हुन्छ। यत्तिले नै उसको सेवा पुग्छ।

यसैगरी, कसैले धेरै धन-सम्पत्ति आर्जन गऱ्यो। उसको छोरा बडो टाठो-बाठो र फुर्तिलो निस्क्यो॥ त्यो देखेर तिमी पनि हृदयैदेखि खुसी होऊ। अनि उसलाई भन—'अहा! कति राम्रो कुरा!' तिम्रो यो कुरा सुनेर त्यो व्यक्ति प्रसन्न हुन्छ। सन्तहरूको भनाइछ—

**पर दुख दुख सुख सुख देखे पर।** (मानस ७।३८।११)

अर्काको दुख देखेर दुःखी होऊ अनि अर्काको सुख देखेर सुखी होऊ। यो सेवा, यो तिमी बिना-रुपियाँ-पैसा, बिनाबल र बिना सामग्रीकै पनि गर्न सक्दछौ। अर्कालाई दुःखी देखेर तिमी पनि दुखी बन। अनि भगवान्सँग प्रार्थना गर—'हे नाथ? मसँग कुनै कुरा छैन। धन

छैन, बल छैन, जसद्वारा म अरुको सेवागर्न सकौँ। म के गरौँ?

तिमी अरुलाई दुखी देख्दा हृदयबाटै दुखी बन। यसैगरी अर्कालाई सुखी देखेर भित्रैबाट प्रसन्न बन। यसो गर्न सक्यौ भने यो तिमीले गरेको ठूलो सेवा हुन्छ। जसका हृदयमा यो भावना हुन्छ, त्यस्ता व्यक्तिको दर्शनमात्रले पनि अरु मानिसलाई शान्ति प्राप्त हुन्छ।

धन-पैसा आदिले म अरुको सेवा गर्छु, उपकार गर्छु, भन्नु त साह्रै नै स्थूल बुद्धिको काम भयो। अझ म त भन्छु नीच बुद्धिको काम। यस स्थितिमा भन्नुपर्दा तिमीले सेवालाई महत्त्व दिएनौ, यसको साटो धनलाई महत्त्व दियौ। जसले धनलाई महत्त्व दिन्छ, त्यो तुच्छ हुन्छ।

धन त तिम्रो हातको मयल हो। त्यसलाई तिमी आफूलाई भन्दा पनि बढी महत्त्व दिन्छौ र दिइरहेका छौ। त्यसैहुनाले त मनुष्यको सेवाका लागि त्यसको आवश्यकता ठान्छौ। यो साह्रै छोटो बुद्धि हो, खोटो बुद्धि हो।

धन आदिले व्यक्तिको सेवा गर्दा त्यस्तो सेवामा अभिमान हुन्छ, तिरस्कार हुन्छ। यस्तो स्थितिमा तिमी जसको सेवा गर्छौ, त्यसैमाथि मैले तिमीलाई यति दिएँ, मैले तिम्रो यस्तो सहायता गरेँ भनेर आफ्नो प्रभाव देखाउन खोज्छौ। यदि कदाचित् त्यो व्यक्ति तिम्रो विरोधी हुन पुग्यो भनेदेखि कुनै समय तिमीले नै त्यस व्यक्तिको निन्दा गर्दै भन्ने छौ—हेर मैले यसको त्यति सहायता गरेँ, आज उही मेरो यसरी निन्दा गर्दछ। यसरी तिमीहरू दुवैका बीच सङ्घर्ष उत्पन्न हुन्छ।

तिमीले कसैको सेवा आफ्नो व्याख्यान वा विद्वत्ताका आधारमा गर्‍यौ अरे। यदि अरु कसैले पनि त्यसै गर्‍यो भने परस्पर ईर्ष्या उत्पन्न हुन्छ। म राम्रो व्याख्यान त दिन्छु। अर्को व्यक्तिको व्याख्यान मेरोभन्दा पनि राम्रो भयो भने मभित्र ईर्ष्या उत्पन्न हुन्छ। तिमी भन्छौ म जनताको सेवा गर्छु। तर, वास्तवमा तिमी सेवा गर्दै छैनौ। आपसी लडाई लंड्दै छौ। यस्ता मानिस समाजमा बिरलै भेटिन्छन्, जो वास्तवमा नै सेवा गर्दछन्।

म राम नामको महात्म्य वर्णन गर्दछु। मानिसलाई राम नामको जपमा लगाउँछु। तर, अर्को कुनैले कसैलाई नाम-जपमा लगाउँछ भने त्यो मलाई मन पर्दैन। वास्तवमा मलाई त्यो कुरा अझ बढी मन पर्नुपर्ने हो, किनभने यसमा मैले सिकाउने परिश्रम पनि गर्नुपरेन। उसको सिक्ने काम पनि सम्पन्न भयो।

कुनै व्यक्ति मेरो मतलाई मान्दैन। ऊ मेरो सिद्धान्तलाई मान्दैन, बरु उल्टो मेरो सिद्धान्तको खण्डन गर्दछ, मेरा मान्यता र मेरा साधना पद्धतिको विरोध गर्दछ। परन्तु ऊ राम नामको प्रचार गर्दछ। मानिसहरूलाई नामजपका लागि उत्प्रेरित गर्दछ भने मभित्र त्यसबारे कस्तो बुद्धि उत्पन्न हुन्छ? मलाई उसले गरेका नामको प्रचार त राम्रो लाग्ला, तर उसले भनेर मानिसहरू नामजप गर्दछन् भन्ने कुराचाहिँ राम्रो लाग्दैन, किनभने त्यसले मेरा सिद्धान्तको, मेरा मतको र मेरा साधना प्रणालीको खण्डन गर्दछ।

यसरी हेर्दा मैले उसका खण्डनलाई जति महत्त्व दिन्छु, नाम प्रचारलाई दिन्नँ। म नामको प्रेमी होइन, म आफ्ना मतको र आफ्ना गुरुको प्रेमी हुँ। मेरा गुरुलाई मान्छौ भने त ठीक छ। तर, मेरा गुरुलाई मान्दैनौ र राम! राम! मात्र जप्छौ भने केही फल हुँदैन। यो मतवादीको कुरा हो।

यदि वास्तवमा नामको महिमा नै हाम्रो अभीष्ट हो भने त नास्तिकभन्दा नास्तिक र तुच्छभन्दा पनि तुच्छ व्यक्ति नै किन नहोस्, उसले भगवन्नामको गान गर्दा यसले त राम्रो कुरा भन्यो भनेर मनमा आनन्द आउनुपर्दछ, हृदयमा उल्लास हुनुपर्दछ। यसैको नाउँ हो—सेवा।

कसैले चलाएको सदावर्त साह्रै राम्रो चलेको छ। त्यसले साह्रै राम्रो भोजन दिन्छ र सबैको राम्रो आदर-सत्कार गर्दछ। जनसमाजमा त्यसको महिमा हुन्छ। मैले पनि सदावर्त चलाएको छु। तथापि समाजमा मेरो महिमागान हुँदैन। यसकुराले मेरा मनमा ईर्ष्याभाव उत्पन्न हुन्छ कि हुँदैन?

यदि इर्ष्या हुन्छ भने मैले गरेको सेवा राम्रो भएन। वस्तुतः यस्तो स्थितिमा मलाई खुसी हुनुपर्ने थियो, कि त्यहाँ राम्रो भोजन दिइन्थ्यो, यहाँ साधारण भोजन दिइन्छ। मैले उपकारको कुनै काम गर्दछु र अर्कोले पनि त्यस्तो काम गरेको देख्दा उसको कामले मभित्र इर्ष्या र द्वेष उत्पन्न हुन्छ भने त मैले गरेको सेवा सेवा भएन। त्यो त सेवाको ढोंग मात्र भयो।

कसैले गरेको कुनै पनि किसिमको सेवा होस्, त्यसबाट हामी प्रसन्न बनौँ। जसले सेवा गर्दछ र जसको सेवा हुन्छ, दुवैलाई देखेर हामी खुसी होऊँ र भनौँ—अहा! उसले क्या राम्रो सेवा गरेको छ। मसँग कसैको सेवा गर्नका लागि फुटेको कौडी पनि नहोस् न! तर म प्रसन्न बनूँ, उसले गरेका सेवाकार्यमा नै आफू सहमत बनूँ। त्यो नै मैले गरेको सेवा हुन्छ।

ल भन? यसो गर्दा के अप्ठ्यारो छ? यसमा कुनै सर-समग्री चाहिँदैन। मात्र आफ्नो स्वच्छ हृदय चाहिन्छ। सेवा बाहिरी वस्तुबाट हुँदैन, हृदयबाट हुन्छ।

मसँग यति धन-सम्पत्ति भएदेखि त मैले यस्तो सेवा गर्ने थिएँ। प्रायः मानिसहरूमा यस्तो धारणा हुन्छ। विचारणीय कुरा हो—जोसँग तिमीले चाहे जति धन छ, के तिनले त्यस धनबाट सेवा गरेका छन्? तिनले त सेवा गरेनन् भने मैले गरौँला?

जब तिमीसँग धन हुन्छ, त्यतिबेला हेरौँला! हुदैँन सेवा। जतिबेला हामीसँग धन पैसा हुन्छ, त्यसबेला हामीमा यस्तो भाव हुँदैन। भाव बदलिन्छ। मैले यस्ता मानिस धेरै देखेको छु।

खालि पुस्तकका कुरा मात्र म गर्दिनँ—कलकत्तामा एकजना सज्जन व्यक्ति थिए। उनी दलाली व्यवसायबाट आफ्नो जीविका गर्दथे। उनी कलकत्ताबाट सत्सङ्गका लागि स्वर्गाश्रम ऋषिकेश आउने गर्दथे। साह्रै असल स्वभाव थियो, तिनको। कुराका प्रसङ्गमा उनी भन्ने गर्दथे—म सामान्य दलाली व्यवसाय गर्दछु, तर पनि त्यो सबै छोडेर सत्सङ्गमा

आउने गर्दछु। यिनीहरूसँग यतिको धन छ। तैपनि यिनीहरू सत्सङ्मा आउँदैनन्। इनलाई आउन के बाधा-अडकाउ छ र?

पछि त ती सज्जनले पनि प्रशस्त धन कमाए। अनि त उनका पनि सत्सङ्गमा ऋषिकेश आउने काम विस्तारै कम हुन थाल्यो। उनलाई सत्सङ्गमा आउने फुर्सत नै हुन छाड्यो।

किनभने धन बढ्यो भने कारोबार पनि बढ्दछ। कारोबार बढ्यो भने अरु काम गर्न समय थोरै हुन्छ। त्यसै हुनाले जबसम्म आफूसँग धन हुँदैन, त्यस बेलासम्म मानिसको अर्कै विचार हुन्छ। धन आर्जन भइसकेपछि भने त्यस विचारमा परिवर्तन आउँछ। तर, सबैको त्यस्तो हुँदैन। कसै कसैको त उस्तै विचार रहिरहन पनि सक्तछ। अतः ती मानिस शूर-वीर हुन्, जसले धनलाई पचाउन सके।

प्रायः सबैलाई धन पच्दैन। यसले अजीर्ण गराउँछ। शक्तिले अजीर्ण गराउँछ। पहिले शक्ति नहुदाँसम्म त शक्ति भएदेखि मैले यसो गर्ने थिएँ उसो गर्ने थिएँ भन्ने भावना हुन्छ। तर, आफूमा शक्ति आइसके पछि त्यसै शक्तिले उसले निर्धालाई दबाउने काम गर्दछ।

चुनावमा उभिएको प्रत्याशी जब भोट माग्न आउँछ, त्यसबेला ऊ भन्छ—मैले तपाईंहरूको सेवाका लागि यसो गर्ने छु उसो गर्ने छु। जब चुनाव जितेर त्यो मन्त्री बन्दछ, अनि त उसले तपाइँलाई पुछ्दैन। यस्तो पनि सेवा हो र? यो त सेवा होइन, स्वार्थ हो।

कुनै मानिस एउटा गाउँमा गयो। उसले त्यहाँ एक जना गाउँलेलाई सोध्यो—तिम्रा गाउँमा त यतिका फोहोरको डङ्गुर लागेको छ। यो फोहोर सफा गर्न यहाँ कुनै मानिस आँउदैन? ती मानिसले भने—पाँचौ वर्षमा एकपल्ट सफा गर्ने मानिस आउँछ, त्यसभन्दा पहिले कोही पनि आउँदैन। जब नेताहरु भोट माग्न आउँछन् अनि सफा गर्ने मानिस आउँछ।

समाजमा अरु कसैले सेवा गर्दछ भने हामीलाई नराम्रो किन लाग्दछ? यसले मेरो महिमा वृद्धि भएन, उसको इज्जत प्रतिष्ठा बढ्यो

भनेर नराम्रो लाग्दछ। उसले अन्नक्षेत्रको सदावर्त खोल्यो, विद्यालय खोल्यो। राम्रो व्याख्यान पनि दिन थाल्यो। अनि त उसको महिमा बढ्यो। मेरो महिमा बढेन।

यहाँ सेवा गर्ने कुरा हो कि, आफनो प्रतिष्ठा बढाउने चाहना हो? कसी लाएर हेर्ने हो भने थाहा हुन्छ। सेवाको त निहुँ मात्र हो त्यो। कुनै पनि राम्रो कुराभित्र नराम्रो कुरा लुकेको हुन्छ—**कालनेमि जिमि रावन राहू।**

बाहिर देख्दा कुर्कुच्चासम्म ढाक्ने गरी राम्रो मेखला भिरेको छ, भित्र भने दुर्भावना छ, खराबी छ। यो नदेखिने भित्री दुर्भावना, डरलाग्दो हुन्छ। जुन दुर्भावना प्रत्यक्ष देखिन्छ, त्यो त्यति डर लाग्दो हुँदैन, जति अप्रत्यक्ष दुर्भावना भयङ्कर हुन्छ ।

जसको असली सेवा गर्ने भाव हुन्छ, त्यो मानिस अर्काको दुःखमा दुःखी र अर्काको सुखमा सुखी हुन्छ। अर्काको दुख देखेर दुखी र अर्काको सुख देखेर सुखी नहुनेले पनि कुनै सेवा गर्न सक्ला? जबसम्म अर्काको दुःखमा दुखी र अर्काको सुखमा सुखी हुन सकिँदैन, त्यस बेलासम्म सेवा हुन सक्दैन।

जो व्यक्ति अर्काको दुखमा दुखी हुन्छ, उसले आफ्नो सुख उसलाई दिन्छ। आफूले सुख लिँदैन र ऊ अर्काकै सुखमा सुखी हुन्छ। उसले आफ्नो सुखका लागि कुनै कुराको सङ्ग्रह गर्नुपर्दैन।

यो कुरा राम्रो गरी बुझ—जो व्यक्ति अर्काको दुःखमा दुखी हुन्छ, त्यसलाई आफ्नो दुखले दुखी हुनुपर्दैन। अर्काका सुखमा सुखी हुने व्यक्तिलाई आफ्नो सुखका लागि भोग र धनको सङ्ग्रह गर्नुपर्दैन।

यस संसारमा उपलब्ध वस्तुलाई आफ्नो ठानेर त्यसलाई अर्काको सेवामा लगायौ भने त तिमीमा अभिमान बढ्दछ। त्यसकारण, सेवाका लागि कुनै वस्तु वा सामग्रीको आवश्यकता छैन। त्यसका लागि मात्र सहृदयता चाहिन्छ।



# मानवजीवनको उद्देश्य

श्रोता—आफ्नो लक्ष्य परमात्मालाई प्राप्त गर्नु नै हो। यो कुरा कसरी थाहा होला? किनभने धनसम्पत्ति पनि कमाउनु छ, मान-सम्मान पनि कमाउनुछ, सुख-सुविधा पनि चाहिएकै छ। यसैगरी, अरु धेरै कुराहरू आर्जन गर्नुपर्ने छ भने परमात्माको प्राप्ति नै हाम्रो उद्देश्य हो, यो कुरा हामीलाई कसरी थाहा हुन्छ?

स्वामीज्यू—तिमीहरूमध्ये कुनै यस्तो मानिस छ,जो त्यस्तो सुख चाहन्छ, जो पूरा छैन, अपुरो छ र नाशवान् छ? के मनुष्य यस्तो जीवन चाहन्छ, जुन सधैँ रहँदैन, कहिले जीवित छ, कहिले जीवित छैन, कहिले मर्छ के कुनै व्यक्ति त्यस्तो ज्ञान पाउन चाहन्छ, जो अपूरो होस्?

हामी त यस्तो सुख चाहन्छौँ, जो कहिल्यै नसकियोस्। त्यस्तो जीवन चाहन्छौं जो सदा सर्वदा रहिरहोस्। त्यस्तो ज्ञान चाहन्छौँ, जो सर्वोपरि होस्, जसमा लेशमात्रको पनि कमी नहोस्। वास्तवमा यस्तो चाहना परमात्मतत्त्वको नै हुन्छ। परमात्मतत्व बाहेक यस संसारमा अरु कुनै तत्व सधैँ रहने, परिपूर्ण र सर्वोपरि तत्त्व छैन। त्यस परमातत्त्वको चहनालाई हामीले आफ्ना तुच्छ सांसारिक चाहनाहरूद्वारा दबाएर राखेका छौं र आफू कहिले सुखी त कहिले दुःखी भइरहेका छौं।

थोरै सुखमा त कुकुर पनि प्रसन्न हुन्छ र गधा पनि प्रसन्न हुन्छ। सुख त त्यस्तो प्राप्त गर्नुपर्दछ, जसमा कुनै किसिमको अपूर्णता नरहोस्। जो सदा पूर्णहोस् र जसमा कुनै कमी नरहोस्। यस्तो सुख संसारले दिन सक्दैन। अतः सांसारिक सुख हाम्रो ध्येय होइन, हाम्रो लक्ष्य होइन।

तिमी विचार गर, जुन सदा-सर्वदा रहन्छ, अखण्डरूपमा रहन्छ, जसमा किञ्चित्मात्र पनि कमी हुदैन, यस्तो सुख त मात्र एउटा परमात्मामा नै छ। यस संसारका जति नै वस्तु प्राप्त होऊन्। जति नै धन, सम्पत्ति, राज्य, वैभव, मान, आदर, सत्कार आदि पाइयोस्, तर त्यसबाट तृप्ति हुदैंन। बरु उल्टो अरु पाइयोस्! अरु पाइयोस्! भन्ने अभिलाषा रहन्छ।

हामी बाँच्न चाहन्छौँ। यसको अर्थ यो भयो कि हामी मरिरहेका छौँ। नत्र भने हामीलाई बाँच्ने इच्छा किन हुन्छ? तै पनि बाँच्ने इच्छा हुन्छ।

यस संसारमा धेरै कुरा जानेर पनि जान्ने इच्छा बाँकी हुन्छ, धेरै

कुरा पाएर पनि पाउने इच्छा बाँकी नै हुन्छ, धेरै कुरा गरेर पनि गर्ने इच्छा रहिरहन्छ। मनमा लाग्छ—यति त गरे अब अरु यति गर्न बाँकी छ।

यो जुन जान्ने, पाउने, गर्ने, आदिमा अपुरो र अधुरोपन रहन्छ, कमी रहन्छ, यो कमी मानिसलाई खट्किनुपर्दछ। यस कमीको पूर्ति संसारले गर्न सक्दैन। संसारका वस्तुको त कुरा छोडौँ, सबै संसारै आफूसँग भए पनि यो कमी पूरा हुन सक्दैन किनभने संसार स्वयम् कहिल्यै पनि टिकाउ छैन। प्रतिक्षण परिवर्तनशील छ। तर, परमात्माको प्राप्तिपछि के हुन्छ? यसबारे गीतामा भनिएको छ—

**यं लब्ध्वा चापरं लाभं मन्यते नाधिकं ततः।** (६।२२)

अर्थात् जुन लाभको प्राप्ति पछि त्यसभन्दा ठूलो अर्को कुनै लाभ हुन्छ भन्ने कुरा उसले मानेन, मान्नै सक्दैन र उसलाई कसैले मनाउन पनि सक्दैन। जुन स्थितिमा त्यो रहन्छ, कस्तै ठूलो आपत्-विपत्मा पनि उसलाई त्यसबाट विचलित गराउन सकिँदैन—

**यस्मिन्स्थितो न दुःखेन गुरुणापि विचाल्यते।**

एक छिनलाई मानिलिऊँ—दुईओटा ठूलाठूला पर्वतहरू एक आपसमा ठोकिँदै छन्। ती दुवैका बीचमा हामीले आफ्नो शरीरलाई राखिदियौँ र त्यसलाई धुलोपीठो पार्यौं भने पनि त्यो आफ्नो स्वरूपबाट विचलित हुदैँन। यो दुःख त्यहाँ पुग्दै पुग्दैन। त्यस दुःखले उसलाई छुँदा पनि छुँदैन। सुख त यति धेरै हुन्छ कि, त्यसभन्दा बढी अरु कुनै सुख नै हुँदैन। दुःख त त्यहाँ पुग्दै पुग्दैन। यस्तो कसले चाहँदैन र! परन्तु मानिस थोरैमा सन्तोष गर्दछन्। यो नै तिनको ठूले गल्ती वा त्रुटि हो।

साधकहरूको यो ठूलो भूल हो कि तिनीहरु साधन गर्दागर्दै बीचैमा सन्तोष गर्दछन्। एउटा मारवाडी भनाइ छ—आँधे कुत्ते खोलन ही खीर हैं। अर्थात् अन्धो कुकुरलाई खोलेनी (अन्न आदि टाँसिएको,कट्कटिएको जुठो भाँडा पखालेको पानी) पनि खीर जस्तै हुन्छ। यस्तै संसारमा थोरै धन आर्जन हुँदा पनि र अलिकति मान-सम्मान प्राप्त हुदाँ पनि मनुष्य त्यसैमा त्यत्तिकैमा प्रसन्न हुन्छ।

वस्तुतः त्यहाँ पाइयो के? जे पाइयो, त्यो सबै धोका हो, छल हो। हामीलाई त सर्वोपरि तत्त्व पो चाहिन्छ—धन चाहिँदा पनि सबैभन्दा उत्तम धन चाहिन्छ। पद चाहिँदा पनि सबैभन्दा ठूलो पद चाहिन्छ। मान नै चाहियो

भने पनि सवैभन्दा श्रेष्ठ मान चाहिन्छ। बढाइ चाहिँदा पनि सर्वोत्तम बढाइँ चाहिन्छ। जीवन चाहिँदा पनि सबैभन्दा उत्तम जीवन चाहिन्छ। ज्ञान नै चाहिँदा पनि सर्वोपरि ज्ञान चाहिन्छ। यो इच्छालाई कसैले मेटाउन सक्दैन। परमात्माको प्राप्ति नभइकन यस इच्छालाई कसैले पुरा गर्न पनि सक्दैन। किनभने सर्वोपरि तत्त्व भनेको केवल एउटा परमात्मा नै हो। अर्जुन भन्दछन—

**न त्वत्समोऽस्त्यभ्यधिकः कुतोऽन्यो लोकत्रयेऽप्यप्रतिमप्रभावः॥**

(गीता ११।४३)

तपाईं अप्रतिमप्रभाव हुनुहुन्छ। अर्थात् तपाइँका प्रभावको कुनै सीमा छैन। तपाइँ जस्तो नै अर्को कुनै छैन भने अझ तपाईंभन्दा पनि बढी त कसरी को पो हुन सक्छ र! यस्तो सर्वोपरितत्त्वलाई प्राप्त गर्नु नै हाम्रो लक्ष्य हुनुपर्दछ।

पहिले जति ठूला-ठूला ऋषिहरू भए, सन्त महात्माहरू भए, सनकादि एवम् नारद आदि भए, ब्रह्मा शङ्कर आदि भए, उनले जुन तत्त्व प्राप्त गरे, त्यही तत्त्व आजका कलियुगी जीवलाई पनि प्राप्त हुन सक्दछ। संसारका सबै वस्तुहरू सबैलाई प्राप्त हुन सक्दैनन तर परमात्मतत्त्व सबैलाई मिल्न सक्तछ। यस्तो कुनै पनि मनुष्य छैन, जसलाई परमात्मतत्त्वको प्राप्ति नहोस्। त्यस परमात्मतत्त्वको प्राप्ति नै मनुष्यजन्मको लक्ष्य हो।

मेरो लक्ष्य परमात्मतत्त्वको प्राप्ति हो भन्ने कुरा पनि मनुष्यले नै बुझ्न सक्दछ। अरु कुनै पनि प्राणीले बुझ्न सक्दैन। प्राणीहरूमा गाई साह्रै पवित्र प्राणी हो। तर, उसलाई पनि हामी यो कुरा बुझाउन सक्दैनौ।

तिमी यति चाडै सत्सङ्गमा आउँछौ। यहाँ धन पाइन्छ र? सम्मान पाइन्छ र? भोग पाइन्छ र? आरोग्य प्राप्त हुन्छ र? भन के लाभ हुन्छ यहाँ आएर? किन आउँछौ तिमी यति चाँडै उठेर?

श्रोता—आत्मालाई शान्ति मिल्दछ।

स्वामीजी—हो, त्यो शान्ति पनि पूरापूर चाहिन्छ। यहाँ थोरै शन्ति पाइयो। यहाँबाट हिँड्यौ भने फेरि त्यस्तो शान्ति तिमीसँग रहँदैन। यस्तो शान्तिको के काम? हामीलाई धेरैभन्दा धेरै शान्तिको खाँचो छ, जो कहिल्यै पनि सकिँदैन। किन्तु, हामी अलिकति शान्ति पाउनासाथ सन्तुष्ट हुन्छौँ, यो हाम्रो भूल हो।

एउटा मानिस ऊँटमा चढेर आफ्नो गाउँ जाँदै थियो। रातीको समय थियो। त्यो एउटा गाउँमा पुग्यो। त्यहाँ एक ठाउँमा कसैको बिहे हुँदैथियो। ढोल–मृदङ्ग बज्दै थिए। त्यो मानिस ब्राह्मण थियो। त्यो त्यस ठाउँमा पुग्यो। उसले हेर्दासाथै थाहा पाइहाल्यो कि एकछिनपछि यहाँ भूयसी दक्षिणा दिइँ दैछ। कुनै बिहे, व्रतबन्ध र यज्ञयागादिको अन्त्यमा ब्राह्मण र कन्या आदिलाई दिइने सामूहिक दक्षिणालाई भूयसी दक्षिणा भन्दछन्। त्यो ब्राह्मण पनि आफ्नो ऊँटलाई बाहिर राखेर भूयसी दक्षिणा लिन भनेर यज्ञस्थलभित्र गयो। यतातिर यजमान ब्राह्मणहरूलाई भूयसी बाँड्न थाले, उता चोरहरूले त्यहाँ बाहिर सुनसान ठाउँमा ऊँट उभिएको देखेर त्यसलाई खेद्दै लिएर गए।

भूयसी दक्षिणा दिँदा चा–चार आना दिइएको थियो। त्यो चारआना दक्षिणा थापेर ब्राह्मण बाहिर आएर हेर्छन् त आफ्नो ऊँट छैन। यता पाउने बेला चार आना दक्षिणा पाइयो, उता चार–पाँच सयको ऊँट नै दम्पच!

यसरी संसारमा त मनुष्यलाई मामुली सुख मिल्यो, थोरै धन मिल्यो, अलिकति मान–सम्मान मिल्यो, केही आदर प्राप्त भयो, अलिकति मीठो भोजन गर्न पाइयो, तर उता बहुमूल्य ऊँट गयो। अर्थात् परमात्माको प्राप्ति गयो। यस्तो स्थिति छ हाम्रो। तुच्छ सुखको लोभमा महान् सुख लुटिदैँ छ। अलिकति आदर सत्कार पाइयो कि हामी फुरुङ्ग पर्छौं।

एकजना सन्तलाई कसैले भन्यो—हामी हजुरलाई आदर गर्छौं।

केको आदर गर्छौं तिमी! मेरो आदर त भगवान्ले गर्नुहुन्छ। तिमीले के आदर गरौला मेरो! के तागत छ तिमीमा र आदर गर्ने? वास्तवमा सन्तको आदर त भगवान्ले गर्नुहुन्छ। अरु बिचरालाई के थाहा सम्मान भनेको कस्तो हुन्छ?

तिमी जुन सर्वोपरि लाभ चाहन्छौ, वास्तवमा त्यही नै परमात्मतत्त्वको इच्छा हो। यस इच्छालाई तिमीले जे सुकै नाम देऊ—ज्ञानको इच्छा भन, प्रेमको इच्छा भन, सुखको इच्छा भन, भगवद्दर्शनको इच्छा भन, भगवत्प्राप्तिको इच्छा भन, त्यो सबै एउटै कुरा हो। त्यही नै हाम्रो लक्ष्य हो। यसै लक्ष्यतिर हामीले डट्नुपर्दछ। अपूरो लक्ष्यमा सहमत नहोऊ। अपुरोमा अल्झिएनौ भने पूरा प्राप्त हुन्छ। अधुरोलाई लियौ भने फेरि त्यसैमा अल्झिन्छौ।

यो मनुष्यशरीर उत्तममा पनि उत्तम छ, अतः यसको लक्ष्य पनि

त्यस्तै अत्युत्तम हुनुपर्दछ, जसभन्दा ठूलो अरु कुनै लक्ष्य नहोस्। यसबाट यो कुरा सिद्ध हुन्छ—परमात्माको प्राप्तिका लागि नै हामीलाई मानव जीवनको प्राप्ति भएको छ।

श्रोता—संसारको सुख छोड्नासाथै सर्वोपरि तत्त्व प्राप्त हुन्छ नै भन्ने कुराको के निधो भयो र! यतातिरको छोडिदिऊँ, फेरि उतातिरको न पाइएला!

त्यसो भयो भने त रित्तै भइन्छ नि?

स्वामीजी—अर्जुनले पनि यस्तै प्रश्न गरेका थिए। यदि साधकलाई योगको प्राप्ति भएन र त्यो बीचमै आयो भने त्यस बिचराको के गति होला? के त्यो उभयभ्रष्ट हुन्छ? (गीता ६। ३७, ३८)

अर्जुन प्रश्न गर्दछन्—संसारलाई छोडिदियो र परमात्मा पनि मिलेनन् भने के व्यक्ति बीचमै झुण्डिइराख्छ?

भगवान् भन्नुहुन्छ—होइन पार्थ? त्यसको यस लोक र परलोक दुवै लोकमा पतन हुँदैन किनभने हे बाबु! जसले अलिकति पनि कल्याणकारी काम गर्दछ, त्यसको कहिल्यै पनि दुर्गति हुदैँन—

**नहि कल्याणकृत् कश्चित् दुर्गतिं तात गच्छति।**

(गीता ६।४०)

तिमीलाई परमार्थको बाटोमा राम्रोसँग हिँड्ने कुनै साधक भेटियो भने यो कुरा तिमी स्वयम् थाहा पाउँछौ। उसको स्वाधीन विचरण र उसको आनन्द तिमीलाई विलक्षण लाग्नेछ। साधना गर्ने मानिस पनि जब साधनामा अगाडि बढ्न थाल्दछन्, उनलाई पनि आफूभित्र एउटा विलक्षण आनन्दको अनुभूति हुन्छ। यसले गर्दा उनी आफ्नो साधनालाई छाड्न सक्दैनन्। जुन सर्वोपरि आनन्द हो, त्यो हामी सबैलाई प्राप्त हुन सक्दछ। यसमा कुनै सन्देह छैन।

सन्देह किन हुँदैन भने साधना गर्दै जाँदा हामीलाई विलक्षणताको अनुभूति हुँदैं जान्छ। तिमी पनि साधना गर, तिमीलाई पनि हुँदै जानेछ। सत्सङ्गबाट धेरै लाभ हुन्छ। मैले त सत्सङ्गभन्दा अर्को बाटो देखेको छैन। साधन अनेक छन्। मानिस साधन गर्दछन् पनि तर, सत्सङ्गद्वारा जुन लाभ हुन्छ, त्यो लाभ वर्षौंसम्म साधना गर्दा पनि प्राप्त हुदैन।



# आफ्नो ज्ञानलाई महत्त्व देऊ

एउटा साह्रै राम्रो कुरा छ। ध्यान दिएर सुन। जो व्यक्ति जुन परिस्थितिमा छ,त्यसैलाई सर्वोपरि मानेर त्यसकै सदुपयोग गर्दा उसको कल्याण हुन्छ। हामीलाई जेजति वस्तु उपलब्ध छ,त्यसभन्दा बढी वस्तुको त आवश्यकता पनि छैन। तिमीसँग जति विद्या छ, त्यसभन्दा बढी जान्नु आवश्यक छैन। तिमीसँग अहिले जति बल छ, त्यसभन्दा बढी बलको खाँचो पनि छैन। तिमीलाई जति बल, बुद्धि, योग्यता, परिस्थिति आदि प्राप्त भएको छ, त्यसैको सदुपयोग गरेदेखि परमात्माको प्राप्ति भइहाल्छ। यो एकदम सत्य र सिद्धान्तको कुरा हो।

तिमीसँग ज्ञानको कमी छैन। बरु आफूसँग भएको त्यस ज्ञानको तिमीले राम्रो उपयोग गरेका छैनौ। त्यसलाई तिमीले महत्त्व पनि दिएका छैनौ। यस कुराको तिमीमा कमी छ। अहिले जस्तो परिस्थिति हाम्रोसामु छ, यो परिस्थिति सधैंभरि यस्तै रहँदैन। यस कुराको ज्ञान तिमीमा कम छैन, प्रशस्त छ। यस ज्ञानको तिमीले सदुपयोग गऱ्यौ भने तिम्रो उद्धारका लागि यति नै पर्याप्त हुन्छ, अलिकति पनि कम हुँदैन। यसको सदुपयोग भनेको त्यस परिस्थितिमा आफू अल्झिने र बल्झिने होइन, त्यसमा प्रसन्न वा अप्रसन्न हुने होइन।

श्रोता—यसको ज्ञान त मलाई छ, तर जस्तो चाहन्छु, त्यस्तो ज्ञान छैन।

स्वामीजी—तिमीलाई जुन कुराको ज्ञान छ,तिमीले त्यसको सदुपयोग गरेका छौ र? जुन वस्तुलाई तिमीले यो नाशवान् हो भनेर बुझेका छौ, त्यसलाई पाउने इच्छा हुन्छ कि हुँदैन?

श्रोता—त्यो त हुन्छ।

स्वामीजी—त्यसोभए त्यसलाई नाशवान् कहाँ सम्झेका छौ त? तिमीले त्यसलाई नाशवान् सम्झेका भए त्यसलाई प्रप्त गर्ने इच्छा तिमीलाई हुने नै थिएन। जुन कुरा नाशवान् छ, त्यसलाई पाएर पनि, के गर्नु? जस्तै, धनी मानिससँग धन हुन्छ, धन भएन भने त्यो धनी हुँदैन। त्यस्तै संसारसँग नाशै नाश छ, जौ आफैँ नाशवान् छ, त्यसले हामीलाई कृतकृत्य कसरी गराउला?

तिमी स्वयम् नाशवान् छैनौ। बरु तिम्रो शरीर नाशवान् छ। तिमीलाई प्राप्त भएका वस्तुहरू नाशवान् छन्। तिमी स्वयम् नाश हुनेमध्येका होइनौ। यी वस्तु त पहिले पनि थिएनन्,पछि पनि रहँदैनन्। वर्तमान समयमा पनि प्रतिक्षण नाशतिरै उन्मुख छन्। तिमी भने पहिले पनि थियौ र पछि पनि रहनेछौ। तिम्रो अस्तित्व निरन्तर रहन्छ। मेरासामु एकपल्ट यस्तो प्रश्न आएको थियो—

म भविष्यमा पनि रहन्छु भन्ने ज्ञान हामीलाई वर्तमानमा कसरी हुन्छ?

यसको उत्तर यो हो—तिमी नराम्रो काम गर्दा डराउँछौ र राम्रो काम गर्दा प्रसन्न हुन्छौ, किनभने नराम्रो काम गरेँ भने मैले पछि भविष्यमा दुःख पाउँछु,राम्रो काम गरेँ भने सुख पाउँछु भन्ने भाव तिमीभित्र छ।

यसको तात्पर्य यही हो कि तिमीले भविष्यमा पनि आफ्नो सत्ता स्वीकार गरेका छौ। हामीले यदि भविष्यमा स्वीकार गरेनौँ भने स्वर्गमा को जाला? नरकमा को जाला? पुनर्जन्म कसको होला? मुक्ति कसको होला? आफ्नो कल्याण हुँदा आनन्द तिमीलाई हुन्छ कि अरु मानिसलाई? भन्नाको तात्पर्य हो—तिमी रहन्छौ, यी शरीर आदि पदार्थ रहँदैनन्।

तिमी आफैँ विचार गर, नाशवान् वस्तुद्वारा अविनाशीलाई कसरी सुख प्राप्त हुन्छ? नाशवान् भन्नुको अर्थ हो, जोसँग नाशै नाश छ, नाश बाहेक अरु केही छैन।

**अंतहु तोहिं तजेंगे पामर तू न तजे अब ही ते।**

जुन वस्तु नाशवान् छ नि! त्यसको उपयोग मात्रै गर। त्यसको भर नपर। यसले मलाई भरिपूर्ण पार्छ भन्दै त्यसलाई आफ्नो आश्रय वा आधार नमान। अलिकति विचार गर, जुन वस्तु अहिले तिमीसँग छैन, त्यसलाई पाएर तिमी कृतकृत्य कसरी होउला? जुन वस्तु अहिले छैन, त्यो त पछि पनि रहँदैन। त्यसले तिमीलाई छोड्छ। यस्ता वस्तुले तिमीलाई कसरी सुखी बनाउन सक्ला? त्यो वस्तु भेटिने हो वा होइन, त्यसकै पनि त केही निधो छैन। भेटिइहाल्यो भने पनि रहने हो कि हैन, किनभने जुन वस्तु नाशवान् छ, त्यसको त नाश हुन्छ नै।

शरीर आदि नाशवान् वस्तु हुन्। यो कुरा तिमीले जानेका त छौ, तर मान्दैनौ। अर्थात्, जानेर पनि यसलाई महत्त्व दिदैँनौ। यदि तिमीले

आफूले जानेको कुरालाई महत्त्व दिँदा हौ त नाशवान् वस्तुको भर गर्ने थिएनौ। त्यसको आशा गर्ने थिएनौ। त्यसलाई पाएर प्रसन्न हुने थिएनौ। त्यसलाई नपाउँदा दुःखी हुने थिएनौ। त्यो वस्तु सधैंभरि मसँग रहिरहोस् भन्ने चाहन्नथ्यौ। त्यो वस्तु नष्ट होला भन्ने चिन्ता पनि गर्दैनथ्यौ।

हामी आफू जुन परिस्थितिको चाहना गर्छौं, त्यस्तो परिस्थिति नहुँदा दुःख लाग्छ भने त्यो दुःख केवल हाम्रो मूर्खताजन्य दुःख हो। मूर्खताबाहेक अरु केही छैन त्यसमा। जो वस्तु वा परिस्थिति स्थिर छैन, त्यसलाई हामी रहिरहोस् भन्ने चाहन्छौं। त्यो रहेन भने दुःखी हुन्छौ। यो हाम्रो मूर्खता नभएर के हो? हामीमाथि कुनै आपत् पऱ्यो वा दुःख आइलाग्यो भने यो कसरी मेटिएला! भनेर हामी चिन्तित हुने गर्दछौँ। यो हाम्रो मूर्खता नभएर अरु के हो? हामीमाथि कुनै आपत्ति आइलाग्यो वा दुःख आइलाग्यो भने हामी त्यो दुःख, त्यो आपत् कसरी छुट्ला भन्दै चिन्तित हुन्छौँ। वास्तवमा यो त आफैँ छुट्दै छ। कुनै पनि कुरा वा परिस्थिति त्यो चाहे हाम्रो अनुकूल होस् वा प्रतिकूल, सधैँ रहिरहँदैन। कुनै पनि पाएको कुरालाई हामीले गुमाउनै पर्दछ।

**सर्वे क्षयान्ता निचयाः पतनान्ताः समुच्छ्रयाः।**
**संयोगा विप्रयोगान्ता मरणान्तं च जीवितम्॥**

(वाल्मीकिरामायण० २।१०५।१६)

'कुनैपनि किसिमका सङ्ग्रहको परिणाम विनाश हो। लौकिक उन्नतिको परिणाम पतन हो। भेटको परिणाम बिछोड हो र जीवनको अन्त मरण हो।'

जसको वियोग हुन्छ, त्यसको संयोगले कसरी सुख प्राप्त गर्नु? त्यस्ता वस्तुको वियोगमा हामी किन दुःखी हुनु? न सुख नै सधैंभरि रहन्छ, न दुःख। तिमी त रहन्छौ नि! स्थायी वस्तु पनि आउने-जाने क्षणिक वस्तुका कारण सुखी र दुःखी हुन्छ भने त्यो मूर्खता नै त भयो!

जुन कहिल्यै पनि नष्ट हुँदैन र अहिले पनि छँदैछ, त्यस परमात्माको प्राप्तिले नै हामीलाई स्थायी सुख मिल्नेछ। त्यस परमात्माबाहेक मानमा, सम्मानमा, आराममा, रुपियाँ-पैसामा, कुटुम्बमा धनमा वा यी-मध्ये कुनै पनि कुरामा तिमीले सन्तोष गर्न थाल्यौ भने एकदिन तिमीलाई धोका हुनेछ।

यहाँ म तिमीलाई त्यो कुरा भन्दै छु, जुन कुरा तिम्रा अनुभवमा छ। जुन कुरा धुरन्धर विद्वान् अथवा एक अक्षर पनि नपढेको निरक्षरले समेत पनि अनुभव गरेको छ। म कुनै वर्ण विशेषको, आश्रम विशेषको, जाति विशेषको अथवा सम्प्रदाय विशेषको कुरा भन्दिनँ, मनुष्यमात्रका अनुभवको कुरा भन्दछु—जसको संयोग हुन्छ, त्यसको वियोग हुन्छ।

यो भनाइ हिन्दुको हो कि? मुसलमानको हो कि? ईसाईको हो कि? केटाकेटीको हो कि? युवकको हो कि? बूढाबूढीको हो कि? स्त्री जातिको हो कि? पुरुषको हो कि? कुनै साधु वा गृहस्थको नै पो हो कि? कसको हो यो भनाइ?

यो त सबैको भनाइ हो। यस कुरालाई महत्त्व दियौ भने तिमी कृतकृत्य हुन्छौ। यहाँ महत्त्वदिनु भन्नाको तात्पर्य हो, निरन्तर आउने-जाने वस्तु वा परिस्थितिबाट आफू विचलित नहुनु, त्यसबाट सुखी वा दुःखी नहुनु।

जसको वियोग अवश्यम्भावी छ, तिमी त्यसको किन भर पर्छौ? तिमी पहिले पनि त्यसको भरपरेका थियौ र त्यससँग वियोग हुँदाँ तिमीलाई दुःख पनि भएको थियो। फेरि पनि तिमी त्यसैको आश्रय लिन्छौ र बारम्बार दुःख भोगिरहन्छौ। तिमी उत्पत्ति-विनाशशील वस्तुबाट खुसी-बेखुसी हुँदैनौ भनेमात्र तिमीले अनुत्पन्न परमात्मतत्त्व भेट्छौ।

जो उत्पत्ति-विनाशशील छ र जसको आदि-अन्त्य तिमीलाई थाहा छ, त्यस्ता वस्तुको इच्छा गर्नु र त्यसलाई पाएर खुसी हुनु नै अल्झो हो। यसबाहेक तिम्रो अल्झो केही छैन। यस अल्झोबाट मुक्त हुनासाथ तिमीलाई परमात्मतत्वको प्राप्ति हुन्छ। त्यस परमात्मतत्त्वको कहिल्यै नाश वा वियोग हुँदैन। त्यो सधैँ भरि जस्ताको तस्तै रहन्छ, किन भने त्यो सत् छ। सत्को कहिल्यै अभाव हुँदैन—'**नाभावो विद्यते सतः।**' (गीता २१। १६)

तिम्रो अपमान भयो भने तिमी साह्रै दुःखी हुन्छौ। अपमान सधैं टिकाउ छ र? तिम्रो सम्मान हुँदा तिमी अत्यन्त प्रसन्न हुन्छौ। के त्यो सम्मान स्थायी छ र? तिमी त रहिरहन्छौ नि! रहिरहने व्यक्तिले आउने-

जाने क्षणिक वस्तुका भरमा आफूलाई सुखी वा दुःखी ठान्दछ भने यो त साह्रै अचम्मको कुरा भयो! गीतामा भगवान् श्रीकृष्णले सबैभन्दा पहिले यही उपदेश दिनुभएको छ—

**न त्वेवाहं जातु नाशं न त्वं नेमे जनाधिपाः।**
**न चैव न भविष्यामः सर्वे वयमतः परम्॥**

(गीता २।१२)

म, तिमी र यी राजाहरू पहिले थिएनन् भन्ने कुरा होइन र पछि हुँदैनन् भन्ने कुरा पनि होइन। यसो भन्नुको तात्पर्य के हो? अहिले जुन परिस्थिति छ, त्यो पछि रहँदैन। जुन वस्तु र परिस्थिति रहँदैन, त्यो आएर के भो? गएर के भो? नाशवान् कुराको प्राप्तिमा किन प्रसन्न हुन्छौ? सम्मान पाइयो त तिमीले के पायौ? खालि धोका पायौ। धोकाबाहेक केही पाएनौ। तिमी जानी जानी धोका किन खान्छौ? म अब सम्मान पाएर प्रसन्न हुन्न र अपमान पाउँदा बेखुसी हुन्न भन्ने कुराको होस तिमीलाई आजैबाट हुनुपर्‍यो, किनभने आदर पनि रहिरहने कुरा होइन, अनादर पनि सधैँ टिक्ने कुरा होइन। सुख पनि सधैँभरि रहने कुरा होइन र दुःख पनि सधैँ टिक्ने कुरा होइन। यस्ता अस्थायी कुरा पाउँदा र नपाउँदामा के फरक पर्‍यो र? जुन वस्तु नाशवान् छ, त्यो त पाइए पनि नपाइए जस्तै हो। नपाइए पनि पाइएन, बेसै भयो। साँचै भन्नुपर्दा नाशवान् वस्तुको सधै वियोगै वियोग छ। संयोग छँदैछैन। संयोग त तिमीले ठानेको मात्र हो। जुन कुरा तिमीसँग सधैँ रहने हुदैँ होइन, त्यसमा प्रसन्नता र अप्रसन्नताको के कुरा भयो र? यो कुरा ठीक हो कि होइन?

श्रोता—एकदम ठीक हो।

स्वामीजी—एकदमै ठीक हो भने आजै, अहिले नै यसलाई स्वीकार गर। ढिलो गर्ने कामै छैन। यसका लागि एक-दुई मिनेटको पनि समय छैन। आउने र जाने नाशवान् वस्तुबाट खुसी-बेखुसी भएनौ भने तिमीले अविनाशी वस्तु पाइहाल्छौ। पाएनौ भने मेरो कान समात्न आउनू।



# साँचो आधार

कसै न कसैको आश्रय लिनु मनुष्यमात्रको स्वभाव हो। त्यसो त सबै प्राणीहरू कसै न कसैको आश्रय लिन चाहन्छन्। कुनै न कुनैलाई आफ्नो आधार बनाउन चाहन्छन्। यस्तो स्वभाव किन भएको? किनभने त्यो परमात्माको अंश हो। यदि यसले परमात्माकै आश्रय लिन्छ भने त्यसलाई कुनै अरुको आश्रय लिने आवश्यकता नै पर्दैन। तर जहिलेसम्म त्यसले परमात्माको आश्रय लिदैँन, त्यति बेलासम्म उसले अनेकौँको आश्रय लिइरहेको हुन्छ। लिनु त पर्ने हो उसले भगवान्को आश्रय तर त्यसको साटो अर्कैको आश्रय लिन्छ। जस्तै—धनको आश्रय लिन्छ, परिवारको आश्रय लिन्छ, विद्याको आश्रय लिन्छ, योग्यताको आश्रय लिन्छ, बलको आश्रय लिन्छ, तर यो आश्रय टिकाउ हुँदैन।

आश्रय वा आधार भनेको परमात्माकै लिनुपर्दछ। मानिसलाई यो कुरा राम्रो हो भन्ने लाग्दछ र यस कुरालाई मान्दछन् पनि, तर तिनीहरू अर्को आश्रय छोड्दैनन्। यद्यपि अर्को आश्रयलिन तिमी पराधीन छैनौ, स्वाधीन छौ। तैपनि अर्काको विशेष आश्रय लिने गर्नाले र त्यसको सुख पनि पाइरहनाले आफूभित्र यो आश्रय छोडेपछि त म कसरी रहौँला? कसरी बाचौँला? हाम्रो निर्वाह कसरी होला? भन्ने खालको एक किसिमको भ्रम तिमीहरूले पालिराखेका छौ। यस्तो भाव मनमा लिएकाले तिमीभित्र यस्तो कायरता आयो कि तिमी तिनको आश्रय छोड्न सक्दैनौ।

जब गहीरो निद आउँछ, त्यसबेला कसको आश्रय रहन्छ र? कसैको आश्रय रहँदैन। परमात्माको पनि आश्रय रहँदैन। त्यस अवस्थामा एक किसिमको होस हराएको स्थिति हुन्छ। बेहोसीमा संसारको आश्रय त छुट्छ, तथापि मूढता अर्थात् अज्ञानको आश्रय भने तिमीभित्र रहिरहन्छ। संसारको आश्रयविना बाँच्न सक्दिनँ भन्ने तिमीमा भ्रम छ। नत्र तिमी सुषुप्ति अवस्थामा कसरी बाँच्दछौ? संसारको आश्रय नरहेपनि सुषुप्तिमा तिमी रहन्छौ।

अब एउटा अर्को कुरातिर पनि ध्यान देऊ—संसारको आश्रय लिँदा मनुष्यलाई त्यति सुख मिल्दैन, जति संसारको आश्रय छोड्दा

निद्रामा मिल्दछ। संसारको आश्रय छोड्दा जुन सुख र ताजापन मिल्दछ तथा काम गर्ने शक्तिको सञ्चय आफूभित्र हुन्छ, त्यो संसारको आश्रय लिँदाखेरि हुदैँन। यसले तिमीमा शक्तिको सञ्चय हुनु त टाढाको कुरा, उल्टो शक्ति खर्च हुन्छ। धन, परिवार, बुद्धि,योग्यता,आदि कुनै कुराको पनि आश्रय लिइरहँदा तिमी बेचैन हुन्छौ, थाक्छौ, तिम्रो शक्ति क्षीण हुन्छ। अनि तिमी सबैलाई छोडेर सुत्छौ। सुत्दा-सुत्दा तिमीमा पुनः शक्ति आउन थाल्छ। यसरी संसारको आश्रय छुट्दा तिमीलाई अत्यन्त विलक्षण शक्ति प्राप्त हुन्छ। परमात्माको आश्रय लिनाले प्राप्त हुने शक्तिको कुनै सीमा नै हुँदैन। त्यसबेला यस्तो असीमित र अपार शक्ति प्राप्त हुन्छ कि भय र चिन्ता आदि त रहँदैन रहँदैन। यसैका लागि भनिएको छ—

**यं लब्ध्वा चापरं लाभं मन्यते नाधिकं ततः।**

(गीता ६।२२)

त्यस भन्दा ठूलो कुनै लाभ न त भएको छ, न हुने छ, न हुन सक्दछ। तर, त्यो लाभ नाशवान्‌को आश्रय छोड्दामात्रै प्राप्त हुन्छ।

जुनकुरालाई तिमी नाशवान् मान्दछौ र जान्दछौ, तर त्यसको आश्रय छोड्दैनौ। तिमीबाट त्रुटि यहीँ हुन्छ। जप र ध्यान गर्दछौ, कीर्तन गर्दछौ, चिन्तन गर्दछौ, तर सँगसँगै नाशवान् संसारको आश्रय पनि लिन्छौँ। यस नश्वर संसारको आश्रय सर्वथा नछोडेसम्म परमात्माको आश्रय पूरापूर पाउन सकिन्न। परमात्माको पूरा आश्रय नलिइकन तिमीलाई पूरा शक्ति प्राप्त हुँदैन।

परमात्माको तर्फबाट कुनै कमी छैन। तिमी परमात्माको जति भर पर्छौ, त्यति नै तिमीलाई आश्वासन प्राप्त हुने छ, शक्ति प्राप्त हुनेछ, लाभ प्राप्त हुने छ, तर संसारको आश्रयलाई सर्वथा छोडेर परमात्मामै सदा आश्रित भयौ भने त तिमीलाई अपार शक्ति मिल्ने छ।

ती परमात्मा कहाँ छन्? उनी सबैका हृदयमा छन्—'**सर्वस्य चाहं हृदि सन्निविष्टः**' (गीता १५।१५), '**ईश्वरः सर्वभूतानां हृद्देशेऽर्जुन तिष्ठति**' (गीता १८।६१)। परमात्मा सबै जीवका भित्र छन्। परन्तु जीवले बाहिरतिर मात्र हेर्दछ। भित्र हेर्दै हेर्दैन। तिमी आफूलाई मै हुँ भन्ने ठान्दछौ। त्यस मपाईँको आश्रय आत्मा हो। आत्माको पनि आश्रय हो, परमात्मा—

**'ममैवांशों जीवलोके'** (गीता १३।२)। तिमीभित्रको आत्मा तिनै परमात्माको अंश हो। तिमी एउटा क्षेत्रमा अंशका रूपमा छौ। तिम्रा अंशी परमात्मा सम्पूर्ण क्षेत्रमा छन्—**'क्षेत्रज्ञं चापि मां विद्धि सर्वक्षेत्रेषु भारत'** (गीता १३।२)। गोपिनीहरूले भनेका छन्—

**न खलु गोपिकानन्दनो भवानखिलदेहिनामन्तरात्मदृक्।**

—तपाईं यशोदानन्दनमात्र हुनुहुन्न। परन्तु जति पनि शरीरधारी छन्, ती चाहे स्थावर होऊन, जङ्गम होऊन, देवता होऊन, राक्षस होऊन, भूत-प्रेत-पिशाच होऊन, नरकवासी होऊन, भजन र ध्यानगर्ने व्यक्ति होऊन, तत्त्वज्ञ वा जीवन्मुक्त होऊन अथवा भगवत्प्रेमी होऊन्, ती सबैका अन्तरात्माका द्रष्टा तपाईं हुनुहुन्छ। यस्ता हुदाँहुदै पनि तपाईं यहाँ कसरी आउनुभयो ?

**विखनसार्थितो विश्वगुप्तये सख उदेयिवान् सात्वतां कुले॥**

(श्रीमद्भा. १०। ३१। १४)

—ब्रह्माजीले प्रार्थना गरेपछि तपाईं प्रकट हुनुभयो। किन प्रार्थना गर्नुभयो ब्रह्माले ? विश्वगुप्तये। अर्थात् संसारको रक्षाका लागि, किनभने संसारको रक्षा तपाईंले नै गर्न सक्नुहुन्छ। अरु कसैमा यो सामर्थ्य छैन। तपाईं यी यादवका कुलमा प्रकट हुनुभएको छ—उदेयिवान्, जन्मनु भएको होइन।

सूर्यको उदय हुन्छ तर सूर्य जन्मे भनेर कसैले पनि भन्दैन, किनभने उदय हुनुभन्दा पहिले पनि सूर्य छन्। जब उनी हाम्रासामु हुन्छन्, अनि हामी तिनलाई उदाएका भन्दछौँ, यसैगरी परमात्मा पनि प्रकट हुन्छन्। हामी शरीरधारीले जस्तो जन्म लिदैंनन्।

मन, बुद्धि, इन्द्रिय, शरीर, व्यक्ति, वस्तु, पदार्थ, रुपियाँ-पैसा आदि केही पनि तिम्रो होइन। तिमीसँग रहदैन्॥ प्रत्येक क्षण त्यो तिमीदेखि अलग हुँदै छ। तैपनि तिमी तिनैको आश्रय लिन्छौ। यी मन र बुद्धि आदि सबै तिम्रै आश्रित छन् तर तिमी भने आफूमै आश्रित रहने वस्तुको आश्रय लिने गर्दछौ, यही नै भूल गर्दछौ। यी नाशवान् कुराहरूको आश्रय नलिएर केवल भगवान्को आश्रय लेऊ—**'मामेकं शरणं व्रज'** (गीता १८।६६) **'तमेव शरणं गच्छ सर्वभावेन भारत। तत्प्रसादात् परां शान्तिं स्थानं प्राप्स्यसि शाश्वतम्॥'** (गीता १८।६२)

जो सबैका हृदयमा विराजमान छन्, तिनै ईश्वरको सर्वतो भावेन शरण लेऊ। तिनैको कृपाले परम शान्ति, संसारबाट सर्वथा उपरति र अविनाशी परम पदको प्राप्ति तिमीलाई हनेछ। भगवान्‌को आश्रय लिनमा हामीहरू सबै नै स्वतन्त्र छौ, कुनै पनि पराधीन छैनौँ। उनको आश्रय प्राप्त गर्न कुनै अयोग्य पनि छैन।

तिमी अहिले भर्खरैदेखि परमात्माको आश्रय लिन सक्दछौ। किनभने उनी तिमीसँग छन् र तिमी उनीसँगै छौ। परमात्मा तिमीबाट अलग रहन सक्दैनन्, तिमी पनि उनीबाट अलग हुन सक्दैनौ। उनी तिमीबाट अलग भए भने त ईश्वर पनि दुईओटा हुने छन्। एउटा उनी र अर्को तिमी। ईश्वरको जुन अखण्डता छ,, सर्वोपरिभाव छ, व्यापकता छ, त्यो खण्डित हुने छ। तिमीबाट अलग रहेर उनको महत्ता रहँदै रहँदैन। त्यसो हुनाले तिनी तिमीबाट अलग हुनै सक्दैनन्, तिमी पनि तिनबाट अलग हुन सक्दैनौ। हो, तिमी आफूलाई उनीबाट अलग रहेको मान्न सक्दछौ तर अलग हुन सक्दैनौ। यसरी नै तिमीले आफूलाई संसारको आश्रित मान्न सक्दछौ, तर आश्रित हुन सक्दैनौ।

तिमीले शरीरको आश्रय लियौ, धनको आश्रय लियौ, कुटुम्बको आश्रय लियौ, बल र बुद्धिको आश्रय लियौ तर के तिमी तिनको आश्रित रहन सक्दछौ? यिनको आश्रित भएर बस्न कोही सक्दैसक्दैन। तै पनि तिमी आफूलाई तिनको आश्रित भएको मानेर गल्ती गर्दै छौ किनभने यो सम्भव छैन, तिनको साथ सधैँ रहँदैन। कुनै समय त्यो साथ छुट्छ। अतः यी नाशवान् कुराबाट विमुख भएर केवल एकमात्र भगवान्‌को नै आश्रय लेऊ। अरुको आश्रय नलेऊ। धनको सदुपयोग गर। अरु सबै काम गर, तर आश्रय भने एउटा भगवान्‌को मात्रै गर। सन्तले भनेका छन्—

**पतिव्रता रहे पति के पासा। यों साहिब के ढिंग रहे दासा॥**

जसरी पतिव्रता स्त्रीहरू आआफ्ना पतिका आश्रयमा रहन्छन्, यसरी नै भक्तहरू भगवान्‌का आश्रित रहन्छन्। जगत्जननी जानकी सासु ससुरालाई आफना बाबु आमा भन्दा पनि बढी आदर गर्दथिन्। तर, जब भगवान् वनवासतर्फ लाग्नुभयो, त्यसबेला जानकीले तिनीहरुलाई पनि छाडिदिइन्। राजा दशरथले त यहाँसम्म पनि भने कि यदि जनकनन्दिनी सीता यहाँ बसिन् भने मेरो प्राण रहन सक्दछ। तै पनि उनी बसिनन्।

उनले भनिन्—म रामलाई छोडेर बस्न सक्दिनँ। जून चन्द्रमालाई छोडेर कसरी बसोस्? सूर्यको किरण सूर्यलाई छोडेर कसरी बसोस्? अनि शरीरको छाया शरीरलाई छोडेर कसरी बसोस्?

यसरी नै कुनै पनि जीव परमात्माबाट अलग भएर रहनै सक्दैन। तर के गर्नु! यसले परमात्माको आश्रय नलिएर नाशवान् संसारको आश्रय लिने गर्दछ। त्यसैहुनाले यसले दुःख पाइरहेछ। यस जीवले छुट्टिने अर्थात् नश्वर वस्तुको सहारा नलिएर सधैँ साथमा रहने परमात्मतत्त्वको सहारा लिएको भए त यो कृतकृत्य हुनेथियो।

तिमीले म संसारको आश्रय लिन्न भन्ने कुरा अहिलेबाटै निश्चय गर। सम्पत्ति कमाउँला, राखौँला तर यसैको भर गर्दिनँ। यतिका दिन मैले संसारबाट लिएँ, अब त्यो लिएको ऋण चुकाउन मैले अरु काम गर्नुछ, त्यसैको सहारा लिनु छैन। यो संसार त आश्रय लिन योग्य छदैछैन, किनभने यो एकै छिनका लागि पनि स्थिर छैन। यति चाँडै यो परिवर्तित हुन्छ कि यसलाई दोहोऱ्याएर देख्न पनि सकिन्न। खालि परिवर्तित मात्र भइरहने नश्वर कुराहरूको थुप्राको नाम नै संसार हो।

जसरी भगवान् दयाका मूर्ति हुनुहुन्छ, त्यसरी नै यो संसार परिवर्तनको मूर्ति हो। परिवर्तन हुनुबाहेक यसमा अरु केही छैन। यस्तो संसारलाई पनि तिमीले आधार मानिरहेका छौ। अब यसबाट विमुख भएर केवल भगवान्का चरणको आश्रय लेऊ, अहिले नै लेऊ, भर्खरै लेऊ।

**'मेरे तो गिरिधर गोपाल दूसरा न कोई, एक बानि करुनानिधान की। सो प्रिय जाकें गति न आन की॥'** अर्काको आश्रय नलेऊ। सर्वतोभावेन भगवानको शरणमा जाऊ—

**'तमेव शरणं गच्छ सर्वभावेन..'** (गीता १८।६२)

**'स सर्वविद् भजति मां सर्वभावेन...'** (गीता १५।१९)

**'सर्वभाव भज कपट तजि मोहि परम प्रिय सोई'** (मानस ७।८७)

वास्तवमा भगवान्का साथमा तिम्रो स्वतः सिद्ध घनिष्ठ सम्बन्ध छ। परिवर्तन हुने तुच्छ वस्तुसँग सम्बन्ध नजोड—मूल कुरा यही हो।



# चनाखो बन!

मेरो कुनै पनि समय निरर्थक नजाओस् भनेर तिमी अहिल्यैदेखि सावधान बन। नचाहिँदा कुरा गर्नु, आलस्य–प्रमाद गर्नु, हाँस–ठट्टा गर्नु, सुर्ती–चुरोट खानुजस्ता निरर्थक काममा र झूट, छल–कपट तथा पापकर्ममा यदि हाम्रो समय खर्च हुन्छ भने यो साह्रै नै दुःखको कुरा हो। यसको परिणाम अत्यन्त डरलाग्दो हुने छ।

हामीलाई यो समय परमात्माको प्राप्तिका लागि मिलेको छ। यसमा आफ्नो स्वार्थ र अभिमानलाई लिएर कसैलाई दुःख–कष्ट दिनु भनेको आफ्ना लागि भविष्यमा ठूलो दुःख जम्मा गर्नु हो। त्यसै हुनाले सावधान बन। आफ्ना एक एक छिनलाई उत्तमभन्दा उत्तम कार्यमा लगाऊ।

रुपियाँ–पैसालाई त तिमी ढुकुटी–दराजमा बन्द गरेर राख्न सकौला, तर तिमीले समयलाई थुनेर राख्न सक्दैनौ। आफ्नो समयलाई राम्रोभन्दा राम्रो काममा लगायौ भने त ठीकै छ, नत्र त यो त्यसै खर्च हुन्छ। समय हाम्रो साह्रै ठूलो पूँजी हो। यो अरु धनजस्तो पूँजी होइन, धनभन्दा पनि ठूलो पूँजी हो। आफूसित लाखौँ करोडौँ रुपियाँ हुदाँहुदै पनि तिमी मर्न सक्छौ, तर समय छदाँछदैं एकैछिन पहिले मर्न चाहँदा पनि तिमी मर्न सक्दैनौ। जिउनु समयको अधीनमा छ। समयावधि सकियो भने तिमी बाँच्न सक्दैनौ। रुपियाँ–पैसाले तिमीलाई बचाउन सक्दैनन्। तिमीलाई त समयले बचाउने हो। समय नै तिम्रो जीवनको आधार हो। रुपियाँ त्यसबेला खर्च हुन्छ, जहिले तिमी त्यसलाई खर्च गर्छौ। परन्तु समय त आफैँ खर्च भइरहेको छ। बस्दा पनि खर्च भएकै छ, काम गर्दा पनि खर्च भएकै छ, भजन गर्दा पनि खर्च भएकै छ, यो त सधैँ खर्च भइ नै रहेको छ।

मृत्यु निरन्तर नजिक आइरहेको छ, त्यसमा एक छिनको पनि

अन्तर हुँदैन। चाहे काम-धन्धा गर, चाहे भजन गर, चाहे समाधि नै लगाऊ। समय त आफ्नो वेगमा दनादन हिँडिरहेकै छ। समय समाप्त भयो कि त्यसै क्षण मर्नुपर्दछ। त्यसपछि त कुनै यस्तो शक्ति छैन, जसले तिमी फेरि बाँच्न सक। आफ्नो जीवनको मुख्य आधार भएको यो समय व्यर्थमा गइरहेछ। यसलाई उत्तमभन्दा उत्तम काममा लगाऊ। यसका लागि सावधान हुनुबाहेक अरु कुनै उपाय छैन। अतः जतिबेला पनि सावधान भइराख। सन्तले भनेका छन् —

**दिल मे जाग्रत रहियै बन्दा।**
**हेत प्रीत हरिजन सुँ करियै परिहरियै दुख द्वंद्वा॥**

म के गर्दै छु? यसको परिणाम कसले भोग्नुपर्ला? यसबारे गम्भीरताका साथ विचार गर। यस्तो विचार, यस्तो सावधानी मनुष्यले नै राख्न सक्दछ। पशु-पक्षी र लहरा-वृक्षमा यस कुराको ज्ञान नै हुँदैन। भोगयोनिका देवताहरूमा पनि यसको ज्ञान हुँदैंन। आफूभित्रको स्वार्थ र अभिमानलाई त्याग गरेर अर्काको हित गर्ने योग्यता मनुष्यमा मात्र छ। यदि त्यसले अर्काको हित र सेवा गरेन भने यो उसको ठूलो भूल हो। भगवान्‌को स्मरण गर्ने र अर्काको सेवा गर्ने अवसर अन्यत्र पाइँदैन। यस अवसरबाट नचुक। तिमीले यो काम गर्‍यौ भने साह्रै ठूलो काम गर्‍यौ। आफ्नो समयलाई सार्थक गराउनेहरूले पश्चात्ताप गर्नुपर्दैन। समयलाई खेर फाल्नेहरूले पश्चात्ताप गर्नै पर्दछ—

**सो परत्र दुख पावइ सिर धुनि धुनि पछिताइ।**
**कालहिं कर्महिं ईश्वरहिं मिथ्या दोस लगाइ॥**

(मानस ७।४३)

जो आफ्नो समयलाई व्यर्थमै खेर फाल्छन्, तिनले साह्रै ठूलो नोक्सानी गर्दछन्। जुन समय भगवान्‌को चिन्तनका लागि छ, त्यो

भोगका चिन्तनमा लाग्दछ, जो समय अर्काको हित र उपकारका लागि छ, त्यो समय अर्काको अहित र अपकारमा खर्च हुन्छ—यो त साह्रै ठूलो नोक्सानीको कुरा हो। यस नोक्सानीबाट आफूलाई बचाऊ र सावधान होऊ, चनाखो बन। पशुलाई पनि हामीले सवधान गरायौँ भने त्यो सावधान हुन्छ। ऊँटलाई यदि सावधान! सावधान! भनिन्छ भने त्यसले अटेरी गर्दैन। स्खलित हुँदैन। गधालाई बच! बच! भन्दा त्यो राम्रोसित हिँड्न थाल्दछ। झन् मनुष्यले त कसैले भन्नुभन्दा पहिले नै आफैँ सावधान रहनुपर्दछ।

**उदीरितोऽर्थः पशुनापि गृह्यते हयाश्च नागाश्च वहन्ति चोदिताः।**
**अनुक्तमप्यूहति पण्डितो जनः परेङ्गितज्ञानफला हि बुद्धयः॥**

बोलेका कुराको अभिप्राय त पशुले पनि बुझ्छन्, प्रेरणा गरेमा घोडा र हात्तीले पनि आफ्नो सवारीलाई बोकेर हिँड्छन्। परन्तु बुद्धिमान् मानिसहरू नभनेको कुरा पनि इसारा मात्रले बुझ्न सक्दछन्, किनभने तिनको बुद्धि अर्काको भित्रीभाव बुझ्ने खालको हुन्छ।

मनुष्यमा स्वयम् सावधान रहने योग्यता छ, तैपनि उसले यस योग्यताको उपयोग गरिरहेको छैन। पशुपक्षीहरूले जस्तै उसले आफ्नो समयलाई खेर फालिरहेको छ। यतातिर उ टी.भी. हेर्दै छ, रमझम गर्दै छ। उतातिर यमराज उसका नजिकै आउँदै छन्, मृत्यु आउँदै छ।

अहिले जुन समय हामीलाई प्राप्त भएको छ, त्यो त्यसै खेर फाल्नका लागि पाइएको होइन। त्यसको सकेसम्म राम्रो काममा उपयोग गर्नका लागि पाइएको हो।

वास्तवमा हामीले गर्नुपर्ने दुईवटा काम छन्—एउटा अर्काको उपकार गर्नु र अर्को भगवान्‌को स्मरण गर्नु। पशु र रुखहरूबाट हामी सेवा लिन सक्दछौँ तर तिनीहरू स्वयम् आफूले सेवा लिन सक्दैनन्।

अर्काको सेवा गर्ने बुद्धि र योग्यता मनुष्यमा बाहेक अरु कसैमा छैन। यसैगरी भगवान्‌को स्मरण गर्नु भगवान्‌सँग प्रेम गर्नु तथा म भगवान्‌को हुँ र भगवान् मेरा हुन् भन्ने भावना गर्नु पनि मनुष्य शरीरमा नै सम्भव छ। त्यसैकारण मनुष्य जतिबेला पनि सावधान र सचेत रहुनुपर्दछ। आफ्ना घरमा ठूलाठूला अक्षरमा सावधान! लेख्नुपर्दछ, जसले गर्दा त्यसमाथि उसको दृष्टि पुगिरहोस् र ऊ स्वयम् सावधान भइरहोस्।

हाम्रो समय साह्रै छिटोछिटो खर्च भइरहेको छ। समय खर्च भइसक्दा हामीले त्यसैघरि मर्नुपर्दछ। हामी किन मर्छौं? किनकि जिउने समय बाँकी छैन। तिमी जतिसुकै बुद्धिमान् होऊ, तिमीमा जतिसुकै बल होस्, तिमीसँग जतिसुकै रुपियाँ-पैसा होस्, तिम्रो जतिसुकै ठूलो राज्य वैभव होस्, तिमीसँग सबै कुरा होस् तथापि मर्नेबेला त्यो सबै कुनै काम लाग्दैन—

**अरब खरब लौं द्रव्य है उदय अस्त लौं राज।**
**तुलसी जो निज मरन है तो आवहिं किमि काज॥**

यसै हुनाले सधैँ सावधान बन। यसका लागि साह्रै सोझो र सरल उपाय यो छ कि—राम! राम! जप्न थालिहाल। अनि भित्र भगवान्‌सँग बारम्बार प्रार्थना गर कि—हे नाथ! ममाथि यत्ति दया गर्नुहोस्—मैले हजुरलाई कहिल्यै नबिसूँ। भगवान्‌को स्मरणले समस्त विपत्तिको नाश हुन्छ—'**हरिस्मृतिः सर्वविपद्विमोक्षणम्।**' (श्रीमद्भा० ८। १०। ५५)

साह्रै सीधा, सरल र महत्वपूर्ण कुरा हो यो। केवल समय व्यर्थ नजाओस् भनेर सावधान हुनु आवश्यक छ। एउटा नामको उच्चारण गरिनेसम्मको समय पनि खेर जान्छ भनेदेखि त्यसले तिम्रो ठूलो हानि हुन्छ।

श्रोता—रामनाम भित्रबाट जप्ने हो कि मुखले?

स्वामीजी—चाहे भित्रबाट जप अथवा बाहिरबाट, जसरी भए पनि जप। नामजप छुट्नुहुँदैन—**'तस्मात् केनाप्युपायेन मनः कृष्णे निवेशयेत्।'** (श्रीमद्भा० ७।१।३१) तिम्रो मन र तिम्रो वाणी कुनै पनि उपायले भगवान्मा लागोस्! यसका लागि कुनै साइत र मुहूर्त पनि हेर्नुपर्ने छैन। मनुष्य शरीर पाइयो भने मुहूर्त पाइयो—

**सोई तित्थ सुतित्थ है,सोई बार सुबार।**
**भद्रा भागी मानवा सुमरचा सिरजणहार॥**

श्रोता—भगवान्को नाम लिनु र भगवान्को कार्य गर्नु, दुवैमध्ये कुनचाहिँ अत्यावश्यक छ?

स्वामीजी—यो प्रश्न त्यस्तै हो, जस्तो कसैले सोध्छ—भात खाऊँ कि पानी खाऊँ, के गरौँ, लौ भन?

दुइटै आवश्यक छ। नाम पनि भज। काम-धन्धा पनि गर। नाम त जतिबेला पनि लिन सकिन्छ, तर काम जतिबेला पनि गर्न सकिँदैन। त्यसै हुनाले नाम जतिबेला पनि लेऊ र मौका मिलेमा काम पनि गर—

**'तस्मात्सर्वेषु कालेषु मामनुस्मर युध्य च।'** (गीता ८।७१) शास्त्रविहित कर्म जुनसुकै पनि तिम्रासामु आओस्, त्यसलाई भगवान्को कर्म ठानेर गर र नाम निरन्तर लिइराख। नामजप मनबाट नछुटोस्।

**चहुँ जुग चहुँ श्रुति नाम प्रभाऊ। कलि बिशेषि नहि आन उपाऊ॥**

(मानस १।२२।४)

चारै युगमा र चारै वेदमा नामको प्रभाव छ, तर कलियुगमा यसको विशेष प्रभाव हुन्छ। यसमा यो जत्तिको अर्को कुनै उपाय छैन। सबै सन्तहरूले एकै स्वरले नामको महिमा गाएका छन्। नामको विषयमा भेद हुन सक्दछ। कसैले ॐ भन्ला! कसैले राम भन्ला! कुनैले हरे राम! भन्ला अर्काले 'ॐ नमो नारायणाय!' भन्ला। यसरी नाममा

फरक हुन सक्दछ, तर नाम-जपमा यी सबै समान हुन्।

श्रोता—राम! राम! भन्दा प्रारब्ध काटिन्छ र?

स्वामीजी—प्रारब्ध त भोगेरै काटिहालिन्छ नि! प्रारब्धका विषयमा केको चिन्ता? जसै भोगियो, उसै काटियो। त्यो त आफैँ नै काटिन्छ। यो त प्रतिक्षण स्वतः र स्वाभाविकरूपमै काटिदैँ रहन्छ।

श्रोता—मुखले बाहिर बाहिर राम राम भन्छन्। चित्त त लाग्दै लाग्दैन। अनि त्यसले के फाइदा?

स्वामीजी—बाहिर बाहिरैभन्दा पनि फाइदा नै हुन्छ। कुनै पनि गरेको काम त्यसै खेर जादैन। तिमी कुनै पनि शब्दको उच्चारण गर, त्यो व्यर्थ जाँदैन। फेरि भगवान्‌को नाम त भगवान् कै भयो। त्यो त झन् व्यर्थ हुँदैँहुदैन। यतिमात्र होइन, भगवन्नामको उच्चारण गर्नाले त्रिलोककै ठूलो उपकार हुन्छ, किनभने शब्द यहीँ एकै ठाउँमा रहँदैन। यो व्यापक हुन्छ र सबै ठाउँमा पुग्छ। व्यापक हुनाले नै त्यो रेडियोबाट सुनिन्छ।

यदि कसैले नराम्रो शब्द बोल्दछ भने त्यसले त्रिलोककै ठूलो अपराध गर्दछ। यदि कसैले आफ्नो मनले कसैको कुभलो चिताउँछ भने त्यसले त्रिलोककै कुभलो चिताउँछ। जस्तै पानीमा एउटा सानो ढुङ्गो फाल। त्यसमा तरङ्ग उठ्छ, तर सूक्ष्म भएकाले त्यो देखिदैँन। यस्तै सानै शब्दको उच्चारण गरियो भने पनि त्यो त्रिलोकमा फैलिन्छ। शब्दको शक्ति अचिन्त्य छ—**शब्दशक्तेरचिन्त्यत्वात्।**

त्यसैहुनाले मन नलागिकनै पनि कसैलै भगवान्‌को नाम लिन्छ भने त्यसले निश्चय नै फलप्राप्ति गर्दछ। अझ मन लगाएर नाम लिन्छ भने त झन् के भन्नुपर्‍यो !



# मौन साधन

म एउटा साधन सिकाउने गर्छु—चुप लाग्नु। भित्रैबाट यस्तो विचार गर्नू कि—मैलै केही पनि गर्नुछैन। न स्वार्थ, न परमार्थ, न लौकिक, न पारलौकिक, केही गर्नु नै छैन। यस्तो विचार गरेर बस। यसरी बस्नका लागि राम्रो समय हो बिहान निद्राबाट बिउँझेपछिको समय। निद्राबाट बिउँझिनेबित्तिकै भगवान्लाई नमस्कार गरेर बस। जसरी गाढा निदमा अलिकति पनि केही गर्ने सङ्कल्प थिएन, त्यस्तै जागेका अवस्थामा पनि केही गर्ने सङ्कल्प मनमा कत्ति पनि नरहोस्। यो जाग्रत्मा सुषुप्ति हो। त्यसबेला तिमीले चिन्तन, जप, ध्यान आदि केही पनि गर्नुछैन। यतिमात्र होइन, चिन्तन आदि गर्दिनँ भन्ने सङ्कल्प पनि गर्नुछैन, किनभने नगर्ने सङ्कल्प गर्नु पनि गर्नु नै हो।

अब मैले अलिकति पनि केही गर्नुछैन। यस्तो विचार गरेर मौन बस। सगुणको उपासना गर्दछौ भने म प्रभुको चरणमा छु भन्ने ठानेर चुपचाप बस। तर यो दोस्रो नम्बरको कुरा हो। एक नम्बरको कुरा त यो हो कि—केही गर्नु नै छैन।

यसरी मौनसाधन गर्दा तिमीभित्र कुनै सङ्कल्प विकल्प भयो अथवा कुनै कुरा सम्झियो भने त्यसको वास्तै नगर, विरोध नगर। त्यसमा न सहमत होऊ, न असहमत। शास्त्रविहित राम्रा सङ्कल्पहरू आए भनेर त्यसमा खुसी नहुनू, शास्त्रनिषिद्ध नराम्रा सङ्कल्पहरू आए भनेर बेखुसी पनि नहुनू।

तिमी भन्ने गर्छौ—मन साह्रै दुष्ट छ। वास्तवमा मन त असल कमसल हुँदैहुँदैन। असल र खराब त मनुष्य स्वयम् हुन्छ। आफू असल भयो भने सङ्कल्प राम्रो हुन्छ, आफैँ राम्रो भएन भने सङ्कल्प पनि नराम्रो हुन्छ। राम्रो र नराम्रो यी दुवैकुरा प्रकृतिका सम्बन्धले गर्दा हुने कुरा हुन्। प्रकृतिसँग सम्बद्ध नभइकन न राम्रो हुन्छ, न त नराम्रो।

उदाहरणार्थ सुख र दुःख दुइटा कुरा छन्। तर, आनन्दको स्थितिमा दुइटै कुरा हुँदैनन्, न सुख न त दुःख। त्यस्तै प्रकृतिको सम्बन्धरहित तत्त्वमा न राम्रो छ, न त नराम्रो। त्यसैहुनाले असल र कम सलको भेद गरेर प्रसन्न र अप्रसन्न नहुनू।

सङ्कल्पहरू आऊन् कि जाऊन्? त्यसबारे पहिले नै यो विचार गर्नु कि वास्तवमा सङ्कल्प आउँदैन, यो त जान्छ। भूतकालमा हामीले जुन जुन काम गरेका छौँ, त्यसको सम्झना हुन्छ अथवा भविष्यमा यसो गरौँला! उसो गरौँला! भन्ने जुन विचार मनमा लिइराखेका छौँ, तिनको सम्झना हुन्छ,—त्यहाँ जानुपर्ने छ, त्यो काम गर्नुपर्ने छ आदि। यसरी हामीलाई भूत र भविष्यका कुराको सम्झना हुन्छन्, जो अहिले वर्तमानमा छदैँ छैनन्। भूत र भविष्यका कुराहरुलाई हामीले सम्झने प्रयास गरेका हुदैंनौ। तर तिनको आफै स्मरण हुन्छ। वास्तवमा उसको सम्झना आउँदै छैन, बरु जाँदैंछ। मनमा जुन कुराहरूले जरा गाडेर बसेका छन्, तिनीहरू निस्कँदै छन्। अतः तिमीले तिनीसँग सम्बन्ध नगाँस, तटस्थ भएर बस। तिनीसँग सम्बन्ध नगाँस्दा तिमीलाई त्यस स्मरणको दोष लाग्दैन।

संसारमा धेरै किसिमका पुण्य कर्महरू भइरहेका हुन्छन्, तर के तिनीबाट हामीलाई पुण्य हुन्छ? यसैगरी संसारमा अत्यधिक पापकर्म हुन्छन्। के हामीलाई तिनको पाप लाग्छ? लाग्दैन। किन लाग्दैन? किनभने ती पापकर्मसँग हाम्रो कुनै सम्बन्ध छैन। तिनमा हाम्रो सहयोग छैन।

जसरी संसारमा पुण्य र पाप भइरहेका छन्, ठीक त्यसैगरी हाम्रा मनमा सङ्कल्प र विकल्प उठिरहेका छन्। हामी तिनलाई गर्दै छैनौ र गर्न चाहँदैनौं पनि। गर्ने सङ्कल्प पनि मनमा छैन। हामीलाई कहिल्यै पनि केही गर्नु नै छैन।

हामी तिनैका साथमा टाँसिन्छौं भने त तिनका पुण्य र पापको, राम्रा

नराम्रा कर्महरूको साथ हुन्छ। जसले गर्दा तिनको फल उत्पत्ति हुन्छ। र त्यो फल हामीलाई भोग्नुपर्दछ। त्यसैहुनाले तिनका साथमा नलागौँ। न तिनको अनुमोदन गरौँ न त विरोध। मनमा सङ्कल्प विकल्प उठ्छन् भने उठिराखून्। यो गर्नुपर्छ, यो गर्नुपर्दैन भन्ने दुवै प्रकारका विचारलाई आफूबाट एकदमै हटाइदिऊँ।

**नैव तस्य कृतेनार्थो नाकृतेनेह कश्चन।**

(गीता ३।१८)

गर्ने नगर्ने दुवैप्रति कुनै आग्रह नराखौँ। गर्ने आग्रह राख्नु पनि सङ्कल्प हो र नगर्ने आग्रह हुनु पनि सङ्कल्प नै हो। गर्नु पनि कर्म हो र नगर्नु पनि कर्म हो। अतः गर्ने र नगर्ने दुवैसित कुनै मतलब नराखेर मौन बसौँ। अनि त हाम्रो प्रकृतिसँगको सम्बन्ध छुट्छ, किनभने क्रियारूपले प्रकृति छँदै छ। त्यो क्रिया बाहिरी होस् वा मनको। सबै प्रकृतिको देन हो। यसरी भित्र बाहिर दुवैतिरबाट मौन बस्यौँ भने त्यसैलाई तत्त्वज्ञान, जीवन्मुक्ति र सहज समाधि भन्दछन्। त्यो प्राप्त भइहाल्छ।

**उत्तमा सहजावस्था मध्यमा ध्यानधारणा।**
**कनिष्ठा शास्त्रचिन्ता च तीर्थयात्राधमाधमाः॥**

सबैभन्दा तल्लो तहको साधन तीर्थयात्रा हो। त्यसभन्दा ठूलो शास्त्रचिन्तन हो। शास्त्रचिन्तनभन्दा ठूलो ध्यान-धारणा हो। सबैभन्दा माथिल्लो तह भनेको सहजावस्था हो (सहज समाधि) हो। त्यस सहजावस्थामा तिमी पुग्दछौ। यसको साह्रै ठूलो महात्म्य छ। नगर्ने कुराको जुन महात्म्य छ, त्यो गर्ने कुराको छैन। कहिले भएको छैन र हुने पनि छैन। नगर्नेमा जुन सामर्थ्य छ, त्यो गर्नेमा छँदै छैन, किनभने गर्ने कुराको त आरम्भ र अन्त्य हुन्छ। त्यो नित्य हुँदैन, तर नगर्ने कुराको त न आरम्भ हुन्छ, न अन्त्य। अतः त्यो नित्य हुन्छ।

वास्तवमा मौन हुनु होइन। मौन त स्वाभाविक हो। जसमा वेदान्तको

संस्कार छ, तिनले आत्मा कर्ता पनि होइन, भोक्ता पनि होइन भन्ने कुरा बुझिहाल्दछन्। अतः सहजावस्था स्वाभाविक हो। गर्नु भनेको त अनित्य हो। तर नगर्नु नित्य हो—

**दौड सके तो दौड ले जब लगि तेरी दौड।**
**दौड थक्या धोखा मिट्या वस्तु ठौड की ठौड॥**

सहजावस्था न जाग्रत् हो, न सुषुप्ति। सुषुप्ति र सहजावस्थामा फरक यत्ति हो कि सुषुप्तिमा बेहोसीपन हुन्छ, तर सहजावस्थामा बेहोसीपना हुँदैन, बरु होस रहन्छ, जागृति रहन्छ र ज्ञानको एउटा दीप्ति रहन्छ—

**आत्मसंयमयोगाग्नौ जुह्वति ज्ञानदीपिते।**

(गीता ४।२६)

मौनसाधनका बेला निद्रा लाग्यो भने जप वा कीर्तन गर्न थाल, उभिने गर। तर जबसम्म नीँद आउँदैन, तबसम्म केही पनि गर्नुछैन, यसैमा दृढ रहू। चुप लाग। एक दुई सेकेन्ड पनि यसरी चुप लाग्यौ भने त ठूलो लाभ भयो। यदि आधा मिनेटसम्म मौन रह्यौ भने त तिमीमा ठूलो शक्ति उत्पन्न हुन्छ। मौन रहँदा जुन शक्ति उत्पन्न हुन्छ, कर्म गर्दा त्यो कहिल्यै उत्पन्न हुदैन। गर्दा त शक्ति खर्च हुन्छ। तिमी काम गर्दा गर्दा थाक्छौ, अनि सुत्छौ। गाढ निद्रामा सबै थकाइ मेटिन्छ। मनमा, इन्द्रियहरूमा र शरीरमा ताजापन आउँछ, काम गर्ने शक्ति पैदा हुन्छ। महाप्रलयमा चुप हुन्छौ भने महासृष्टि गर्ने सामर्थ्य प्राप्त हुन्छ। यसरी जति पनि सामर्थ्य छ, त्यो सबै नगर्दा नै प्राप्त हुन्छ। नगर्नु नै परमात्माको स्वरूप हो, जसबाट सबै सामर्थ्य प्राप्त हुन्छ।

केही दिनसम्म चिन्तन नगरी मौन रहने कुराको अड्कल पाइन्न। तिमी केही दिनसम्म विचार गर, अनि थाहा पाउने छौ। अहिले थाहा नपाउन्जेल पनि सहजावस्था यस्तो हुन्छ भन्ने कुरालाई मान। यस सहजावस्थाको वर्णन सन्तका उपदेशमा पनि कमै पाइन्छ। सिन्थल भन्ने

ठाउँमा श्रीहरिरामदासजी महाराज हुनुहुन्थ्यो। उहाँको वाणीमा यस्तो आएको छ—

**सहजाँ मारग सहज का, सहज किया विश्राम।**
**हरिया जीव र सीव का एक नाम अरु ठाम॥**
**सहज तन मन सहज पूजा।**
**सहज सा देव नहीं और दूजा॥**

उहाँले आफ्नो परिचय पनि यसरी दिनुभएको छ—

**हरिया जैमलदास गुरु, राम निरंजन देव।**
**काया देवल देहरो, सहज हमारे सेव॥**

अर्थात् श्रीजैमलदासजी महाराज मेरा गुरु हुनुहुन्छ। जो प्रकृतिदेखि अत्यन्त अतीत छ, त्यो मेरो देवता हो। यो शरीर मेरो देवल हो। अनि सहज (केही पनि नगर्नु) नै मेरो सेवा हो। यसैगरी कबीरदासजीको वाणीमा आएको छ—**साधो सहज समाधि भली।**

अन्य सन्तहरूका वाणीमा सहजावस्थाको वर्णन धेरै कम पाइन्छ। तिनमा यसो छनक मात्र आउँछ। यस्तो सहजावस्थाका प्राप्तिको उपाय हो—भित्र र बाहिर दुवैतिरबाट चुप (मौन) हुनु, अर्थात् केही नगर्नु। केही पनि नगर्दा सबै साधनहरू भर्ती हुन्छन्। यसलाई सहज समाधि भन्दछन्। यसैलाई सन्तहरुले मूक सत्सङ्ग पनि भनेका छन्।

श्रोता—के त्यसबेला आफ्ना मनको निरीक्षण पनि नगर्ने?

स्वामीजी—हुँदैन, बिलकुलै गर्नुहुँदैन। मनका साथ आफ्नो सम्बन्ध स्वीकार गर्दा मात्र मनको निरीक्षण गरिन्छ। मनसँग त हाम्रो सम्बन्ध नै छैन। त्यसो हुनाले मनतिर त हेर्ने पनि होइन। मनको निरीक्षण नगर्नु पनि कुनै मामुली कुरा होइन। यो साह्रै नै ठूलो कुरा हो। जस्तै एक पैसा अरबौँ रुपियाँको पनि अंश हो। यसैगरी, जसलाई परमात्म प्राप्ति, जीवन्मुक्ति तथा सहज समाधि भनिन्छ, त्यसैको अंश हो यो मनको निरीक्षण नगर्नु।

श्रोता—कुनै पनि साधनमा यो (मौनसाधन) गर्न सकिन्छ?

स्वामीजी—हो, कुनै पनि साधनमा गर्न सकिन्छ, साथै हिन्दू, मुसलमान, ईसाई, यहूदी र फारसी आदि जो कोही साधकले पनि यो मौनसाधना गर्न सक्दछ। मैले दुईटा कुरा पहिले नै भनेको थिएँ। एउटा त ज्ञानमार्गको बाटो देखाउँदै मैले भने—परमात्मा सबै ठाउँमा परिपूर्ण र व्याप्त हुनुहुन्छ। छ, अर्थात् अस्तिरूपमा विद्यमान हुनुहुन्छ—तिमी यस्तै धारणा गर। अर्को भक्तिमार्गको कुरा भनेको थिएँ—भगवान्को चरणमा पर! यिनै दुइटा वास्तविक बाटा हुन्—

**भगतिहिं ज्ञानहिं नहिं कछु भेदा। उभय हरहिं भव संभव खेदा॥**

(मानस ७।१५)

मैले गर्नुपर्ने नै केही छैन। पहिले पनि गर्नुपर्ने थिएन, अहिले पनि गर्नुपर्ने छैन, न त पछि पनि गर्नुपर्ने केही छ। भगवान्को चिन्तन पनि गर्नुछैन। भगवान्का चरणमा समर्पणभावले लम्पसार पर्नु मात्र छ। त्यसै चरणको चिन्तनसम्म पनि गर्नुछैन। न संसारको चिन्तन गर्नुछ, न भगवान्को! आफैँ चिन्तन हुन्छ भने चिन्तन मेटिँदैछ भन्ने जान्नू, आउँदै छैन। यो नै अन्तिम साधन हो।



# सबैले परमात्मालाई भेटाउन सक्दछन्

एउटा यस्तो कुरा छ, जसको महिमा वर्णन गर्न मै पनि सक्दिन। यदि तिमीले यसतर्फ ध्यान दियौ भने सधैँका लागि कृतकृत्य हुने छौ। त्यो कुरा यो हो—

त्यस्तो कुनै पारमार्थिक साधन छैन, जसलाई हामी गर्न सक्दैनौ। अनि यस्तो कुनै सांसारिक कार्य छैन, जसलाई हामी सबैले गर्न सक्दछौँ। परमात्मालाई पाउने योग्यता र सामर्थ्य त हामी सबै मनुष्यसँग छ, तर सांसारिक वस्तुहरूलाई प्राप्त गर्ने योग्यता र सामर्थ्य सबै मनुष्यमा हुँदैन।

जस्तो कामनाको पूर्ति गर्नु र कामनाको त्याग गर्नू—यी दुई कुरा छन्।

कामनाको पूर्ति त कहिल्यै कसैले गर्न सक्दैन। मानौँ म इन्द्र भएँ, सम्राट् भएँ, ठूलो धनी भएँ, प्रशस्त सम्पत्ति आर्जन गरेँ, तै पनि मेरा कामनाको पूर्ति हुदैँन। तर, कामनाको त्याग भने हुन सक्दछ। सांसारिक इच्छाको पूर्ति कहिल्यै कसैले गर्नै सक्दैन। तर, परमात्माको प्राप्ति सबैले गर्न सक्दछन्। यसका लागि कोही अयोग्य छँदै छैन।

परमात्माको प्राप्तिका लागि नै हामीलाई यो मानव शरीर प्राप्त भएको छ। जुन कामका निम्ति यो शरीर प्राप्त भएको छ, यदि त्यही काम गर्न सक्दैन भने त्यसले अरु के गर्न सक्ला! सांसारिक इच्छापूर्तिका लागि यो शरीर पाइएकै होइन भने मनुष्यले त्यस इच्छाको पूर्ति कसरी गर्न सक्छ? गर्नै सक्दैन।

परमात्मालाई प्राप्त गर्नका लागि र सांसारिक कामनाको परित्याग गर्नका लागि हामी सबै स्वाधीन छौँ। आफ्ना सांसारिक कामनाको पूर्ति गर्नमा भने हामी सबैका सबै पराधीन छौँ। यहाँ यतिका मानिसहरू

बसेका छन्। कुनै सांसारिक कामना पूरा गर्न समर्थ छ भने मलाई भनोस्! कहिले पनि कुनै समर्थ छैन! परन्तु आफ्ना इच्छाको परित्याग गर्न र परमात्मालाई प्राप्त गर्न सबैका सबै समर्थ छन्, कुनै पनि असमर्थ छैन। सबका सबै पात्र छन्, कुनै अपात्र छैन। सबका सबै योग्य छन्, कुनै अयोग्य छैन।

सांसारिक वस्तुहरूको प्राप्ति त दुई जनालाई पनि एक समान हुँदैंन, तर परमात्माको प्राप्ति भने सबैलाई एकै समान हुन्छ। उहिले नारद, व्यास, शुकदेव आदि महात्माहरूलाई जुन तत्त्वको प्राप्ति भएको थियो, त्यसै तत्त्वको प्राप्ति आज पनि कसैले चाह्यो भने गर्न सक्दछ। ब्राह्मण होस्, क्षत्रिय होस्, वैश्यहोस्,शूद्र होस्; ब्रह्मचारी होस्, गृहस्थ होस्, वानप्रस्थ होस् अथवा सन्यासी होस्; बिरामी होस् अथवा स्वस्थ होस्; नपढेको होस् अथवा पढेलेखेको होस्; निर्धन होस् वा धनवान् होस्, सबैका सबै परमात्मालाई प्राप्त गर्नका लागि अधिकारी छन्। यसमा तिमीहरूले जतिसुकै तर्क वितर्क गर, त्यो टिक्दैन।

सांसारिक वस्तुहरूको प्राप्तिमा कुनै पनि व्यक्ति स्वतन्त्र छैन, किनभने तिनको प्राप्ति अर्काको अधीनमा छ। अर्काको अधीनता स्वीकार नगरी, अर्काको सहायता नलिई सांसारिक सुख–भोग कसैले एक्लै गर्न सक्दैन। परन्तु परमात्माको प्राप्ति भने एक्लै गर्न सक्दछ, किनभने परमात्माको प्राप्तिमा अलिकति पनि कसैका सहायताको आवश्यकता पर्दैन। परमात्माको प्राप्तिमा सबका सबै स्वतन्त्र छन्।

पारमार्थिक कुरा सिकाउनेहरू पनि जुनसुकै बेला तयार भेटिन्छन्। दत्तात्रेयजीले चौबीस ओटा गुरु बनाए। तिनले पारमार्थिक कुरा सिकाउनेहरूलाई नै गुरु बनाए। त्यो नसिकाउनेलाई किन गुरु बनाउँथे? गुरुको कहिल्यै पनि अभाव हुँदैहुँदैन।

केटाकेटी उमेरमा खेलौनाको कामना हुन्छ, तर आजभोलि

खेलौनाको कामना हुन्छ र? यसबाट यो कुरा सिद्धभयो कि कामनाहरू छुट्छन्। यो तिम्रो अनुभवको कुरा हो। सांसारिक कामनाहरू धेरै बेर टिक्न सक्दैनन्। एउटा इच्छा पूरा भएपछि तिमी अर्को इच्छालाई समात्न पुग्छौ। यसरी तिमी नयाँ-नयाँ इच्छाहरूलाई समातिरहन्छौ। ती इच्छाहरूलाई समात्न छोड्यौ भने तिमी धन्य बन्दछौ।

परमात्मा प्राप्तिको कामना त कसैको कहिल्यै पनि मेटिन्न, खालि त्यो भित्रभित्रै दबिएर-छोपिएर बस्छ। जुन कामना टिकाऊ छैन, त्यसलाई हामी समातिरहन्छौँ तर जुन कामना कहिल्यै मेटिँदैन, त्यतातिर ध्यानै दिदैँनौ—यो हाम्रो वस्तुस्थिति हो।

परमात्माप्राप्तिको कामना पूरा गर्न हामीहरू सबै सबल छौँ, निर्बल छैनौँ। परन्तु, सासारिक कामना पूरा गर्न भने सबै निर्बल छौँ, कुनै पनि सबल छैनौँ।

श्रोता—सांसारको इच्छा र परमात्माको इच्छा दुवै बिलकुलै फरक हुँदाहुँदै पनि एकै ठाउँमा रहन्छन् कि क्या हो?

स्वामीजी—हो, दुवै इच्छा एकै ठाउँ हुन्छन्। जहाँ भोगको इच्छा छ, त्यहीँ मोक्षको पनि इच्छा छ। भोगको इच्छा निवृत्त भएपछि परमात्माप्रतिको इच्छा जागृत् हुन्छ। संसारको इच्छालाई मेटाइदियौ भने परमात्माको इच्छा आफैँ पूरा हुन्छ। संसारको इच्छा त कहिल्यै पनि पूर्ण हुँदैन। लाखौँ-करोडौँ अरबौँ जन्म लिएपनि कहिल्यै पूर्ण हुँदैन। बरु नयाँनयाँ इच्छाहरू थपिदैँ जान्छन्—**जिमि प्रतिलाभ लोभ अधिकाई।**

श्रोता—दुवै विपरीत इच्छाहरू एकैठाउँ कसरी रहन्छन् त?

स्वामीजी—एउटा इच्छालाई पो तिमीले समायौ, अर्को इच्छा त तिमीमा स्वतः छँदै छ। संसारको इच्छालाई तिमीले समाएका छौ, परमात्माको इच्छा त तिमी आफैँमा छँदैछ। म सधै बाँचिरहूँ, मभित्र अरु कुनै अज्ञान नरहोस्, म सधैँ सुखी रहूँ—यो तिम्रो आफ्नो इच्छा हो।

भोगहरूको इच्छा तिम्रो आफ्नो होइन।

इच्छाका प्रेरक तिमी आफैँ हौ। तिमीले आफैँ सांसारिक इच्छाहरूलाई छोडिदियौ भने ती टिक्न सक्दै सक्दैनन्। जसको पूर्ति हुनु सम्भव नै छैन, त्यसलाई त छाडि नै दिनुपर्दछ। हाम्रा सासारिक इच्छाहरु पूरा हुदैँनन् किनभने वास्तविक रूपमा संसारको अस्तित्व नै छैन। परमात्मा प्राप्तिको इच्छा पूरा हुन्छ, किनभने परमात्माको अस्तित्व सदैव छ। सासारिक वस्तुहरू सधैँ रहदैनन्, नष्ट हुन्छन्, तर परमात्मा सधैँभरि. रहन्छन्, नष्ट हुँदैनन्।

श्रोता—संसारमै बसेर सासांरिक इच्छाबाट अलग कसरी रहन सक्छौँ?

स्वामीजी—संसारमै रहँदा पनि हामीलाई सबैथरी इच्छा हुन्छन् र? हुँदैनन्। बनावटी इच्छा कसरी सबैथरी हुन सक्छन्? सँगै भोजन गर्न बसेका दुईव्यक्तिका पनि एकै किसिमका इच्छा हुँदैनन्। कसैलाई गुलियो मन पर्छ। कसैलाई पिरो मन पर्छ। तीमध्ये पनि कसैलाई थोरै पिरो मनपर्छ त कसैलाई धेरै। यसरी संसारका सबै कुराका इच्छा सबैलाई हुँदैनन्। त्यसै हुनाले सांसारिक इच्छाहरू छोडिने इच्छाहरू हुन्। जसरी संसारका अरु इच्छाहरूबाट तिमी अलग रहन्छौ, त्यसरी नै जुन इच्छालाई तिमीले समातिरहेका छौ, तिनबाट पनि तिमी अलग रहन सक्दछौ। वस्तुतः तिमी स्वयम् संसारमा छँदैछैनौ, परमात्मामै रहन्छौ—**'ममैवांशो जीवलोके'** (गीता १५।१७)

संसारमा त शरीर, इन्द्रिय, मन, बुद्धि पो त रहन्छ—**'मनः षष्ठानीन्द्रियाणि प्रकृतिस्थानि।'** (गीता १५७)

जो तिम्रा होइनन्, त्यस्ता शरीर र इन्द्रियहरूलाई त तिमी आफ्ना ठान्छौ, तर जुन तिम्रा आफ्नै हुन्, ती परमात्मालाई भने तिमी आफ्नो ठान्दैनौ, यो तिम्रो ठूलो भूल हो।

श्रोता—परमात्मालाई नदेखीकन आफ्नो कसरी मानौँ?

स्वामीजी—तिमी आफैँ देखिन्छौ र? तिमी भन्छौ—यो शरीर मेरो हो, इन्द्रिय मेरा हुन्, मन मेरो हो, बुद्धि मेरो हो, यसबाट यो कुरा सिद्ध हुन्छ कि तिमी शरीर, इन्द्रिय, मन र बुद्धिदेखि अलग छौ। त्यसैहुनाले तिमी कस्ता छौ? तिम्रो रूप रङ्ग कस्तो छ? भन। तिमी स्वयम्ले आफूलाई देख्दैनौ तर पनि आफूलाई मान्दछौ कि मान्दैनौ? अहिले जुन प्रसङ्ग चल्दै छ, त्यसतर्फ ध्यान देऊ—जुन इच्छाको पूर्ति हुन सक्दैन, त्यसलाई छाडिदेऊ र जुन इच्छाको पूर्ति हुन सक्छ, त्यसलाई ग्रहण गर। गाँठी कुरा यही नै त हो। यो पक्का सैद्धान्तिक कुरा हो।

**'यं लब्ध्वा चापरं लाभं मन्यते नाधिकं ततः।'** (गीता ६।२२)—जसको प्राप्तिभन्दा ठूलो अरु कुनै प्राप्ति छँदैछैन र दुःख भन्ने कुरा जसका नजिक पुग्नै सक्दैन, त्यसको प्राप्ति पनि तिमीहरूलाई हुन सक्दछ। तर त्यो प्राप्ति त्यसबेला मात्र हुन्छ, जहिले तिमी अर्को कुनै सासारिक इच्छा आफूभित्र राख्दैनौ। यदि परमात्माको इच्छा पनि रह्यो र संसारको इच्छा पनि रह्यो भने त काम बिग्रियो—**दुविधा मे दानों गये माया मिली न राम।**

श्रोता—भगवान्ले सांसारिक इच्छा हामीभित्र उत्पन्न गरिदिनुहन्छ?

स्वामीजी—भगवान्ले कहिल्यै पनि कसैको कामना उत्पन्न गर्नुहुँदैन, हुदैन, हुदैंन! कामनालाई त तिमी आफैँले उत्पन्न गरेका हौ। तिमीले सच्चा हृदयले प्रार्थना गर्‍यौ भने भगवान्ले त्यसलाई मेटाइदिनुहुन्छ। जुन कुराले तिमीमाथि आपत्ति आइलाग्छ, त्यस्तो काम भगवान्ले कहिल्यै गर्नुहुँदैन किनभने तिमी भगवान्कै अंश हौ। अंशीले आफ्नो अंशको बिगार-नाश कसरी गर्ला?



# दृढ विचारले फाइदा

श्रोता—जबसम्म हाम्रासामु सांसारिक भोग आउँदैनन्, त्यस बेलासम्म त म भोगहरूमा फँस्दिनँ भन्ने दृढ भाव रहन्छ। तर भोग सामुन्नेमा आइसकेपछि भने हामी त्यस दृढतामा कमजोर हुँदैजान्छौँ। यस्तो अवस्थामा के गर्ने?

स्वामीजी—साह्रै राम्रो प्रश्न हो यो। भोगमा नफँस्ने जुन भाव हो, यो अति नै दुर्लभ कुरा हो, यो साह्रै नै मूल्यवान् कुरा हो। संसारसँग सम्बन्ध तोड्नु र भगवान्सँग सम्बन्ध जगाउनु, यो खास मुष्यता हो। वास्तवमा हेर्ने हो भने संसारसँग हाम्रो सम्बन्ध जोडिँदैन। यसैगरी भगवान्सँग हाम्रो सम्बन्ध टुट्दैन। हामी संसारसँग मिलौँ र भगवान्सँग छुट्टिऔँ भन्ने कुरा एकदमै असम्भव छ। भगवान्सँग अलग हुने शक्ति हामीसँग छैन। यसरी नै स्वयं सर्वसमर्थ हुदाँहुदैँ पनि भगवान्सँग यो शक्ति छैन कि उहाँ हामीबाट अलग हुनुहोस्। वास्तविक कुरा त यो हो कि हाम्रो सम्बन्ध संसासरसँग छैन, तर भगवान्सँग हाम्रो सम्बन्ध छ। जो छैन, उसलाई छाडिदेऊ र जो छ, त्यसलाई जाग्रत् गर। यही नै मूलभूत कुरा हो।

जहिलेसम्म हाम्रासामु सांसारिक पदार्थहरू आउँदैनन्, तहिलेसम्म हामी भोगहरूमा फँस्दैनौँ भन्ने दृढभावना रहन्छ। यतिमात्रै पनि तिमीमा भयो भने यो ठूलो कुरा हो। भोगहरूमा इच्छा नहुनु माथिल्लो तहको कुरा हो, यो सामान्य कुरा होइन। संसारलाई छाड्ने र भगवान्लाई प्राप्त गर्ने इच्छा सामान्य नै छ भने पनि यसको फल नाशवान् हुँदैन। बरु त्यो फल अविनाशी र कल्याणकारक नै हुन्छ—'**स्वल्पमप्यस्य धर्मस्य त्रायते महतो भयात्।**' (गीता (२।४०)

लाखौं, करोडौं, अरबौं रुपियाँ प्राप्त भए पनि यसका सामुन्ने ती

केही होइनन्। त्रिलोककै राज्य पाइए पनि त्यसको इज्जत एउटा रौं जति पनि छैन, किनभने ती सबै नाशवान् हुन्।

हाम्रासामु सांसारिक पदार्थ आए भने हामी विचलित हुन्छौँ। हाम्रो अवस्था यस्तो किन हुन्छ भने हामी तिनलाई छोड्छौँ भन्ने पहिले गरेको विचारलाई च्याट्टै छोडिदिन्छौँ। यस्तो नराम्रो बानी हामीमा बसिसकेको छ।

सत्सङ्गहरूमा सुनेर र पुस्तकहरूमा पढेर तिमी अब म यस्तो गर्छु भन्ने विचार त गर्छौ. तर फेरि त्यसलाई छोडिदिन्छौ। सामान्य कुरालाई पनि लिन्छौ अनि छाडिदिन्छौ। यस्तो बानीले नै तिमीलाई कमजोर बनाउँछ।

यदि कुनै कुरा समाते पछि समातेको समात्यै गर्ने र छोडेपछि छोडैको छोड्यै गर्ने तिम्रो बानी बसेको भए तिम्रो यो दुर्दशा हुने थिएन। तिमीलाई मैले भनेको नराम्रो नलागोस्, वास्तवमा यो दुर्दशा नै हो!

हामी हरेक कामको विचार त गर्दछौँ, तर त्यस विचारमा स्थिर रहँदैनौँ। पदार्थमा र त्यसको सङ्ग्रहमा त्यति अवगुण छैन,जति अवगुण हाम्रो नराम्रो बानीमा छ। जहिलेसम्म तिमीमा दृढता हुँदैन, त्यतिबेलासम्म तिमी कुनै पनि क्षेत्रमा जाऊ, आफ्नो उन्नति गर्न सक्दैनौ। बानी बिग्रनाले हाम्रो ठूलो नोक्सानी भइरहेको छ। एउटा कुरामा पनि दृढ रहने बानी बसाल्यौ भने तिमी कृतकृत्य हुने छौ। यदि भगवान् मेरा हुन् भन्ने कुरा एकपल्ट दृढ निश्चय भएको छ भने चाहे जेसुकै होस्, भगवान् मेरा नै हुन्। यस्तै ससार मेरो होइन भने कहिल्यै पनि हुँदै होइन।

साँचो बोल्नु छ भने यो दृढ निश्चय गर कि आजबाट मैले साँचो नै बोल्नु छ, झुटो बोल्नु छैन। त्यसैमा पनि तिमी म मझुटो बोल्दिनँ भन्ने कुरामा अडिग रहू, म सत्य बोल्दछु भन्ने कुरामा होइन।

त्यागको महिमा साह्रै ठूलो छ। चाहे जेसुकै होस्, म झुटो

बोल्दिनँ। चाहे मेरो प्रतिष्ठा जाओस्, इज्जत जाओस्, धन–पैसा जाओस्, अथवा मेरो अन्य कुनै किसिमको हानि–नोक्सानी हुन थालोस् तर म झुटो बोल्दिनँ। सत्य बोल्ने अवसर आएका बेला तिमी आफूलाई कतै कमजोर अनुभव गर्न थाल्यौ र साँचो बोल्ने हिम्मत भएन भने आफूलाई यति खुकुलो गराऊ कि झुटो नबोल, बरु चूप् लागेर बस। अगाडिको मानिसलाई भन—सबै कुरा सबैलाई भनिदैँन। त्यसैहुनाले म बोल्दिनँ। ममा साँचो कुरा भन्ने सामर्थ्य छैन। साँचो कुरा भन्ने अहिले विचार छैन। सबैकुरा भन्ने मलाई मन छैन। मेरो केही काम छ, भनेर त्यहाँबाट उठेर अन्यत्र जाऊ। काम यही हो कि—भन्नु छैन ! यसो गरियो भने म झुटो बोल्दिनँ भन्ने तिम्रो प्रतिज्ञा सत्य हुन्छ। तिमीलाई मैले यस्तो उपाय सिकाएको छु, जसलाई तिमी गर्न सक्छौ।

तिमीले एकपल्ट जुन दृढ निश्चय गरिसकेका छौ, त्यस निश्चयको हत्या कहिल्यै नगर। आफ्ना विचारहरूको हत्याले तिमीलाई बारम्बार जन्म र मृत्युतिर धकेल्छ। अतः आफ्नो विचार पक्का गर—सांसारिक पदार्थहरू मेरासामु किन नआऊन्, अब म विचलित हुन्न। मैले थुकेर चाट्दिनँ।

आफ्नो विचारमा दृढ रहनाले तिमीभित्र एउटा शक्तिको प्रादुर्भाव हुन्छ, एउटा बलको प्रादुर्भाव हुन्छ। अनि तिम्रो त्यो अवस्था हुँदैन। मानिसले तिमीलाई डरछेरुवा भनून्, तिम्रो निन्दा गरून्, त्यसको वास्तै नगर। हामीले त आफ्नो विचारलाई परिपक्व बनाउनु छ।

तिमी जस्ता छौ, त्यस्तै सजिलो साधन तिमीलाई म बताउँछु। तर, त्यसको धारण त तिमीले नै गर्नुपर्दछ। तिमीलाई साह्रै सुगम र साह्रै सरल उपाय म भन्छु, अनि म यो उपाय गर्न सक्छु र यसले मेरो हित हुन्छ भन्ने कुरा तिमीबाट स्वीकार पनि गराउन सक्दछु। तिमी खालि तयार मात्र  होऊ। यत्तिले नै काम भैहाल्छ।

मूल कुरा यो हो कि—परमात्माको प्राप्तिका लागि नै हामीलाई भगवान्‌बाट यो शरीर प्राप्त भएको छ। त्यसैहुनाले हामीलाई परमात्मा नभेटिए अरु के भेटिन्छ? संसार त भेट्नै सकिँदैन। रुपियाँ पाइयो, कुटुम्ब पाइयो भन्ने केवल भ्रम मात्र हुन्छ। सबै सकिन्छ, कहाँ पाइयो र! संसारलाई पाउन सकिन्नँ, भगवान्‌देखि छुट्टिन सकिन्न। एकदमै साँचो कुरा हो यो।

मैले कसैको पनि अहित गर्ने छैन, कसैलाई पनि दुःख दिने छैन, यसै कुरामा तिमी दृढ बन। हेर्दा यो कुरा सामान्यजस्तो देखिन्छ, वास्तवमा यसको साह्रै ठूलो महत्त्व छ। भजन, ध्यान र जप आदिभन्दा यसको कम महत्त्व छैन। साह्रै बहुमूल्य कुरा हो यो। तर, मानिस यतातिर ध्यानै दिँदैनन्। यसलाई त्यसै छोडिदिन्छन्।

जसरी रोग निको भयो भने भोक लाग्न थाल्दछ र भोजन गरेपछि शरीरमा शक्ति आउन थाल्दछ। पाचन शक्ति ठीक छ भने रुखो अन्न खाँदा पनि शक्ति बढ्दछ। यसैगरी तिमी आफ्नो विचारमा दह्रो रह्यौ भने त तिमीमा पनि एउटा शक्तिको प्रादुर्भाव हुन्छ। अतः चाहे जेसुकै होस् म असत्य बोल्दै बोल्दिन भनेर आफ्नो विचारमा दह्रिलो बन। चलाखी-चतुऱ्याईँ नगर। मेरो बेइज्जती होला कि भन्ने कुराले नडराऊ। झुटो बोलेर सत्य लुकाउने गऱ्यौ भने त यसबाट झन् ठूलो बेइज्जत हुन्छ। लुकाएनौ भने तिम्रो इज्जत हुन्छ। बठ्याँइ गर्न खोज्यौ भने असल मानिसहरूले तिमीलाई यो केही कामको छैन भन्नेछन् र तिमी तिनीहरूका हृदयबाट तल खस्ने छौ। भगवान्‌का हृदयबाट पनि खस्ने छौ। त्यसै हुनाले बठ्याई नगर। सोझो र सफा कुरा गर। साँचो कुरा गर्दा तिमीलाई कसैले शुलीमा हाल्दैनन्। यो कुनै कठिन काम होइन, । तिम्रो आफ्नै कल्याणका विचार हुनाले यो कुरा साह्रै सजिलो हुन्छ। पहिले अलिकति डर लाग्छ। पछि त्यो डर पनि हराउँछ।

अत: मसँग कसैले केही कुरा सोध्यो भने मैले सबैकुरा खुलस्त भनिदिन्छु। होइन भने हजारौँ मानिसका अगाडि भन्दिन्छु—मैले जान्दिनँ। सोझो कुरा गर्न मलाई के बाधा भयो? मानिस मलाई केही नजान्ने र मूर्ख ठान्लान्, बुद्धि नभएको ठान्लान्, त्यत्ति न हो! बुद्धिमान् नै ठानेरै पनि तिनले मलाई कुन चाहीँ भगवत्प्राप्ति गराइदिने हुन् र! मलाई तिनले बुद्धि नभएकै माने पनि के तिनले मेरो भगवत्प्राप्तिमा विघ्न पारिदिन सक्छन्? जे म जान्दछु, त्यो भन्छु, जे जान्दिनँ, त्यो भन्दिनँ। अरु पनि धेरै कुरा छन्, जो म जान्दछु, तथापि भन्दिनँ। मेरो भन्ने काम भएर तिमीले मसँग यो कुरा सोध्छौ, तर यो कुराभन्दा तिम्रो फाइदा हुँदैन, त्यसैभएर म भन्दिनँ।

मेरो पोल खुल्छ भन्ने कुराले नडराऊ। पोल भनेको खोक्रो हो, आडम्बर हो। तिम्रो पोलै खुले पनि तिमीसँग ठोस त रहिरहन्छ। पोल राखेर के गर्छौ? वेदव्यासजीले आफ्ना जन्मका कुरा श्लोकबद्ध शैलीमा कतिपल्ट लेखिदिए। कस्तो हृदय थियो तिनको? त्यसै हुनाले तिनी सबैका पूजनीय छन्, आदरणीय छन्। साँचो कुरा प्रकट गर्दा केही हानि–नोक्सानी हुँदैन, हानि–नोक्सानी हुन्छ कि भन्ने ठान्नु तिम्रो खालि भ्रममात्र हो।



# भोगासक्ति कसरी छुट्ला ?

श्रोता—जब भोग पदार्थ हम्रा सामु आउँछन्  हामी किन हो कुन्नि विचलित हुन्छौँ त्यसबेला हामीले के गर्ने ?

स्वामीजी—जसले लट्ठी चलाउन पहिले नै सिकेको छ, त्यसैले शत्रु अगाडि आएका बेला त्यससँग मुकाबिला गर्न सक्दछ। जसको शत्रु पहिले नै सामुन्नेमा आइसक्यो र आफूले लट्ठी चलाउन सिकेको छैन भने त्यहाँ त उसले लट्ठी खानै पर्दछ। सत्सङ्गको कुरा त तिमी जान्दछौ तर जब भोग-पदार्थ तिम्रा सामुन्ने हुन्छन्, तिमी ती सबै कुराहरूलाई बिर्सिदिन्छौ। ती सत्सङ्गका कुरा काम लाग्दैनन्।

**तब लगि सब ही मित्र है, जब लगि पयो न काम।**
**हेम अगन शुध होत है पीतल होवे श्याम॥**

जहिलेसम्म काम पर्दैन, तहिलेसम्म सबै मित्र हुन्छन्। को मित्र हो ? को होइन ? भन्ने कुरा त कामपर्‍यो भनेमात्र थाहा हुन्छ। सुन पनि पहेँलै देखिन्छ, पीतल पनि पहेँलै देखिन्छ,, परन्तु आगोमा राखे पछि सुन टल्किन्छ, पीतल कालो हुन्छ।

एकथरि कुरा हामीले सिकेको हुन्छ भने एकथरि जानेको कुरा! जानेको कुरा वास्तविक हुन्छ, त्यो कहिल्यै यताउति हुँदैन, सिकेको कुरा बुद्धिसम्म मात्रै सीमित रहन्छ, आफूसम्म पुग्दैन। जानेको कुरा भने आफूसम्म पुग्दछ।

जबसम्म कुनै कुरा आफूसम्म पुग्दैन, तबसम्म त्यो व्यवहारमा जसरी आउनुपर्ने हो, त्यसरी आउँदैन। जसको उद्देश्य परमात्माको प्राप्ति छ, उसलाई सिकेका कुरामा सन्तोष हुँदैन। सन्तोष नहुनाले नै त्यसले वास्तविकता के हो ? भनेर खोजी गर्दछ। यसरी खोजी गर्दागर्दै उसलाई तत्त्वको अनुभव हुन्छ।

एउटा सत्सङ्ग हुन्छ, अर्को कथा–वार्ता र पुस्तकहरूका विवेचन आदि हुन्छन्। कथा,व्याख्या आदिका कुरा त धेरै ठाउँमा हुन्छन्, तर अनुभवी र भगवत्प्राप्ति गरेका महापुरुषहरूको सत्सङ्ग भने कमै ठाउँमा पाइन्छ। अनुभवी मानिसहरू पहिले सत्य, त्रेता द्वापरमा पनि कमै थिए र आज त झन् कम छन्।

हिजोआज त विद्यार्थीहरू पनि शास्त्रको अध्ययन राम्रोसँग गर्दैनन्। कोरा परीक्षा दिएर पास हुन्छन्। केही सोध्यो भने उत्तर दिन सक्दैनन्। जे पढेका छन्, त्यही पनि भन्न सक्दैनन् भने झन् वास्तविक ज्ञानको कुरा त धेरै टाढा भयो। मेरो तिमीहरुसँग यही अनुरोध छ, कि तिमीहरूले वास्तविक तत्त्वलाई बुझ्ने प्रयास गर। कोरा पढाइ नपढ।

जब भोगपदार्थ तिम्राअगाडि आउँछ, त्यतिबेला तिमी सबैकुरा छोडेर त्यसकै पछि लाग्छौ। तिमीले सुने–जानेका आदर्श र उपदेशका कुराहरू त्यतिखेर सबै व्यर्थ हुन्छन्। यसबारे एउटा कथा भन्छु। सुन—

एकजना पण्डित थिए। उनी सधै रातीमा कथा भन्ने गर्दथे। तिनले आफ्नो घरमा एउटा बिरालो पालेका थिए। त्यसलाई उनले राम्रोसँग सिकाइ–सधाइ गरेका थिए। त्यतिबेला हिजोआजजस्तो बिजुली बत्ती थिएन। कथा भन्ने समयमा उनले बिरालोलाई आफ्नो अगाडि बस्ने इसारा गर्दथे। बिरालो बसेपछि त्यसको टाउकोमा अलिकति माटो राखेर त्यसमाथि एउटा दीयो सल्काएर राखिदिन्थे। त्यसै दीयोको प्रकाशमा उनी कथावाचन गर्दथे। श्रोतामध्ये कसैले भन्थ्यो—मेरो मन स्थिर हुँदैन। यो सुनेर उनी भन्दथे—तिम्रो के कुरा हो यस्तो ? हेर, तिमीभन्दा त पशु भए पनि यो बिरालो नै ठीक छ। कसरी एकदम चुपचाप बसिराख्छ,। तिनै श्रोतामध्येको एउटा अर्को मानिसले विचार गर्‍यो—हेरौँ, पण्डितजीको बिरालो कसरी चुपचाप बस्दोरहेछ ? त्यसले अर्कोदिन कथा सुन्न जादा आफ्ना साथमा एउटा मुसो पनि लिएर गयो।

जब पण्डितजीको कथा हुँदै थियो, त्यसैबेला त्यस व्यक्तिले आफूले ल्याएको त्यो मुसो त्यस बिरालोका अगाडि छोडिदियो। मुसालाई देख्नासाथ साथ बिरालो के टिक्थ्यो! त्यो त उत्तिखेरै त्यस मूसालाई झम्टिन पुग्यो। दीयो भुईंमा खस्यो। कथा खत्तम्!

यही स्थिति मानिसको पनि हुन्छ। कथाका कुरा सुन्दासम्म त तिनीहरु चुपचाप बस्छन्, जब भोगपदार्थ अगाडि आउँछ, फेरि त तिनको वशको कुरो हुँदैन किनभने तिनका भित्र धन–पैसा आदिको आकर्षण छ, यसकारण रुपियाँ–पैसा आकर्षक वस्तु अगाडि आएपछि उनलाई मन रोक्न मुस्किल पर्दछ। भोगको यो आकर्षण तिनमा पहिले थिएन, पछि भयो भन्ने कुरा होइन। आकर्षण त पहिले नै थियो, तर त्यो भित्र दबेको थियो।

तामाको कल्लीमा सुनको पालिस लगाइदिने हो भने त्यो सुनैको जस्तो देखिन्छ। त्यस्तै भर्खरै सिकेको कुरा पालिस गरेको जस्तो हुन्छ। परन्तु, जानेको र अनुभव गरेको कुरा ठोस हुन्छ। जसभित्र स्वयम्को अनुभव हुन्छ, त्यसकासामु जेसुकै कुरा आओस्,त्यो विचलित हुँदैन। त्यो त जुनसुकै परिस्थितिमा पनि जस्ताको तस्तै रहन्छ।

परमात्माप्राप्तिको कुरालाई मानिसहरू अप्ठ्यारो विषय ठान्छन्। वास्तवमा परमात्माको प्राप्ति कठिन विषय होइन, त्यसभन्दा त भोगासक्तिको त्याग गर्नु नै कठिन कुरा छ। भगवान्ले भन्नुभएको छ—

**भोगैश्वर्यप्रसक्तानां तयापहृतचेतसाम्।**
**व्यवसायात्मिका बुद्धिः समाधौ न विधीयते॥**

(गीता २। ४४।)

जसको भोग र सङ्ग्रहमा आसक्ति छ, तिनीहरू परमात्मालाई पाउनु त धेरै टाढाको कुरा! उनलाई पाउने निश्चयसम्म पनि गर्न सक्दैनन्। मैले परमात्मतत्त्वलाई नै प्राप्त गर्नु छ, आफनो कल्याण गर्नु

छ भन्ने कुरा उनमा दृढ भएको हुँदैन। त्यसै हुनाले जबसम्म आफूभित्र भोगको महत्त्व र आकर्षण रहिरहेको हुन्छ, तहिलेसम्म मानिसहरू कुरा गर्न मात्रै त सिक्लान् तर आफूभित्र परमात्माप्राप्तिको निश्चय गर्न सक्दैनन्। आफ्नो निश्चय नै पक्का छैन भने परमात्म प्राप्ति कसरी हुन्छ?

तिमी जड, असत् र क्षणभङ्गुर पदार्थदेखि माथि उठ्यौ भने त परमात्मतत्वको प्राप्ति कठिन छैन। जो स्वतः सिद्ध छ, त्यसलाई पाउन के कठिन छ र? जुन कुरा छैन, त्यसैमा आकर्षण हुँदा पो कठिनाइ भएको हो। भएको वस्तु अर्थात् अस्तिको प्राप्ति कठिन छैन। नभएको वस्तु अर्थात् नास्तिको त्याग गर्नु कठिन छ। जब तिमी नभएका पदार्थको नै त्याग गर्न सक्दैनौ भने अरु के त्याग गर्न सक्दछौ? आश्चर्य लाग्दो कुरा त यो छ कि तिमी आफूले जानेका असत् वस्तुको पनि त्याग गर्न सक्दैनौ। जसलाई तिमी जान्दछौ कि—यी असत् हुन्, नाशवान् हुन्, सदाकाल साथमा रहँदैनन्, आउने र जानेमात्र हुन्, तिनको पनि त्याग गर्दैनौ। यो तिम्रो ठूलो गल्ती हो।

श्रोता—असत्को आकर्षण कसरी छुट्छ?

स्वामीजी—यसका लागि कर्मयोगको पालन गर। गीतामा भगवान्ले कर्मयोगका कुरा विशेषरूपमा भन्नुभएको छ र यसको महिमागान गर्नुभएको छ—

**कर्मयोगो विशिष्यते।** (गीता ५।२)

कर्मयोगको कुरा गीतामा जति स्पस्टता साथ भेटिन्छ, त्यति अरु ग्रन्थहरूमा भेटिँदैन। कर्मयोगको तात्पर्य हो—अर्कालाई सुख दिनु र त्यसको साटो आफूले केही पनि न चाहनु। बाबु-आमालाई सुख दिनु छ। स्वास्नी, छोरा, भाइ, भतिजालाई पनि सुख दिनु छ। छर-छिमेकीहरुलाई पनि सुख दिनु छ। सबैलाई सुख दिनु छ। यस भावनालाई उपयोगमा ल्यायौ भने असत्तर्फको आकर्षण छुट्ने छ।

जसरी पनि अर्कालाई सुख मिलोस्, आनन्द मिलोस्, यस किसिमको जुन भावना हुन्छ, त्यो साह्रै उत्तम भावना हो, मामुली होइन। तिमी विषय अगाडि आउँदा पनि म विचलित न होऊँ भन्ने चाहन्छौ भने यस सिद्धान्तलाई समात—अर्कालाई कसरी सुख हुन्छ? अर्कालाई कसरी आनन्द हुन्छ? वस्तु सधैँ मसँग रहने होइनन्, त्यसै भएर यी अर्काको उपयोगमा आए भने राम्रो हुन्छ। यस्तो भावना मनमा भयो भने सबैको हितमा मन जान्छ। जब अर्काको कल्याणमा तिम्रो प्रेम र संलग्नता हुन थाल्छ, अनि त भोगपदार्थ अगाडि आए पनि तिनलाई त्याग्न सजिलो हुन्छ। तर, मलाई कसरी सुख होला? मलाई कसरी सम्मान मिल्ला? मेरो प्रतिष्ठा कसरी बढ्‌ला? मेरा कुराको कसरी महत्त्व होला? मलाई कसरी आनन्द मिल्ला? यस्तो भावना मनमा रहिरह्यो भने भूत, भविष्य, वर्तमान तीनै कालमा कल्याण हुँदैन, किनभने यस्तो भावना राख्नु त पशुता हो, मनुष्यता होइन। अर्काको हित गर्ने भावना भयो भने सुख भोग्न चाहने तिम्रा इच्छाको स्वतः नाश हुन्छ।



# मनुष्यका तीन शक्ति

मनुष्यमात्रमा तीनओटा शक्ति छन्—पहिलो गर्ने शक्ति, दोस्रो जान्ने शक्ति र तेस्रो मान्ने शक्ति। कुनै पनि मानिसले भन्न सक्दैन—म केही पनि गर्दिनँ र गर्न पनि चाहन्नँ। म केही पनि जान्दिनँ र जान्न पनि चाहन्नँ। म केही पनि मान्दिनँ र मान्न पनि चाहन्नँ। वास्तवमा मनुष्य स्वयम् गर्छ पनि, गर्न चाहन्छ पनि, जान्दछ पनि र जान्न चाहन्छ पनि, यसरी नै मान्दछ पनि र मान्न चाहन्छ पनि। यदि माथि उल्लिखित गर्नु, जान्नु र मान्नुका साथमा योग शब्द पनि जोडिने हो भने यी तीनै कुरा मनुष्यलाई मुक्तिदिने हुन पुग्छन्। जस्तै—गर्नु अर्थात् कर्ममा योग जोडिँदा त्यो कर्मयोग हुन्छ। जान्नु अर्थात् ज्ञानमा योग जोडिँदा त्यो ज्ञानयोग हुन्छ तथा मान्नु अर्थात् भक्तिमा योग जोडिँदा त्यो भक्तियोग हुन्छ। योग त्यसबेला हुन्छ, जतिबेला समताको भावना हुन्छ—'**समत्वं योग उच्यते।**' (गीता २।४८) समताको तात्पर्य हो—राग-द्वेष, हर्ष-शोक नहुनु।

एउटा विलक्षण कुरा छ—संसारमा यस्तो मनुष्य नै हुँदैन, जसले साधन गर्न सक्दैन र परमात्मप्राप्तितिर हिँड्न सक्दैन। ऊ स्वयम् साधना नै गर्न चाहदैन र उसलाई परमात्मातिर लाग्ने चाहना नै छैन भने त अर्कै कुरा। यदि उसले चाहन्छ भने त साधना गर्न सक्दछ। मनुष्यको जुनी हामीलाई साधना गर्नको निम्ति नै प्राप्त भएको हो। यो साधना योनि हो, कर्मयोनि होइन। मनुष्ययोनिबाहेक अरु सबै योनिहरू भोगयोनि हुन्।

मनुष्यमा केही गर्ने एउटा शक्ति छ, एउटा आग्रह छ। यो गरेर फेरि के गरौँ? उसको मनमा यस्तो प्रश्न पनि उठ्छ। यसबाट उसभित्र गर्ने कुराको वेग छ,भन्ने थाहा हुन्छ। गर्ने कुराको यो वेग आफ्ना लागि कर्म गरेर मेटिदैँन बरु बढ्दछ। केही कुरा पनि आफ्ना लागि गरिन्छ भने त्यो गर्ने वेग बढ्छ।

गर्नु र पाउनु अर्थात् म यो गर्छु र यसबाट यो पाइन्छ, यी दुईकुरा भए भने कर्मयोग हुँदैन॥ त्यो त कर्ममात्र हुन्छ। अर्काका लागि केही गरिन्छ भने त गर्ने कुराको वेग मेटिन्छ। अर्थात् गर्न बाँकी नै रहँदैन।

संसारलाई जानेर मात्र जान्ने कुरा पूरा हुँदैन। खालि पढेर मात्र जान्ने

काम पूरा हुँदैन। आफूलाई जाने पछि मात्र जान्ने काम पूरा हुन्छ। जब सम्म तिमी आफू म के हुँ? यसलाई जान्दैनौ, तबसम्म जतिसुकै पढ, जतिसुकै जान, जस्तोसुकै उपाधि प्राप्त गर, जति धेरै लिपि र भाषाहरू जान, कला–कौशल सिक, विभिन्न किसिमका चतुऱ्याइँ सिक, तथापि जान्नेकुरा बाँकी नै रहन्छ। तर तिमीले यदि आफ्नो स्वरूपलाई राम्रोसँग जान्यौ भने त जान्ने कुरा केही बाँकी रहँदैन।

संसारका विभिन्न किसिमका वस्तुहरुलाई मान्दैरह्यौ भने मान्ने कुरा कहिल्यै पूरा हुदैँन। मान्ने कुरा पूरा हुन्छ, मात्र परमात्मालाई मानेपछि। परमात्मा मान्ने विषय नै हो, किनभने मान्ने सिवाय उनलाई जान्न सकिन्न, देख्न सकिन्न र सिक्न पनि सकिन्न। अतः परमात्मा छन् भन्ने कुरालाई तिमीले दृढतापूर्वक मान्यौ भने तिम्रो मान्ने काम पूरा हुन्छ।

मान्नुका साथ ज्ञानको विरोध चाहिँ हुनुहुँदैन। यो संसार पहिले थिएन, पछि पनि रहँदैन र अहिले पनि प्रत्येक क्षण नष्ट हुँदै छ। हामीलाई यसको ज्ञान छ। त्यसैहुनाले संसारको मान्यता ज्ञान विरोधी छ र यो नित्य रहँदैन। परमात्मा पहिले पनि थिए,पछि पनि रहन्छन्,अहिले पनि छन् यो मान्यता नित्य रहन्छ। परमात्मा भनेको खालि मान्ने र श्रद्धा गर्ने विषय हो। तर्कको विषय होइन। तर्कको विषय त त्यो हुन्छ, जसका बारेमा हामी केही जान्दछौँ र केही जान्दैनौँ। परमात्माका विषयमा त हामी केही जान्दै जान्दैनौँ। त्यसै हुनाले परमात्मालाई मान्नै पर्दछ। तर, उनलाई मान अथवा नमान, यस विषयमा तिमी स्वतन्त्र छौ। परमात्मालाई, सन्त–महात्माहरूलाई र शास्त्रहरूलाई त तिमीले मान्नैपर्दछ। यस संसारको कुनै आधार छ,। यसको कुनै आश्रय छ। यो कसैबाट उत्पन्न भएको छ। यो कसैबाट आश्रित छ, कसैबाट पालित छ र कसैमा लीन हुन्छ। यसरी पहिले यसलाई मान्नुपर्दछ, अनिमात्र त्यो देखिन्छ।

हामीहरू गर्नमा, जान्नमा र मान्नमा पनि दृढ छैनौँ। अतः हामीबाट भूल यहीँ हुन्छ। हामी भित्र यति दृढता हुनुपर्दछ कि—यदि परमात्माले आफै आएर तिमीले गल्ती गऱ्यौ भनेको खण्डमा पनि उनलाई 'यसमा तपाईंको गल्ती छ, मेरो गल्ती छैन। तपाईंले बिर्सिनुभएहोला मैले त बिर्सेको छैन', भन्न सक्नुपर्दछ। पार्वतीजीले भन्नुभएको छ—

**जन्मकोटि लगि रगर हमारी। बरउँ संभु न त रहउँ कुमारी॥**
**तजउँ न नारद कर उपदेसू। आपु कहहिं सत बार महेसू॥**

(मानस बाल० २१।३)

यस्तो मान्यता छ। भेट्छु भने परमात्मालाई भेट्छु, होइन भने अरु कसैलाई पनि भेट्ने आवश्यकता छैन। न मलाई भोगको आवश्यकता छ, न त सङ्ग्रह गर्ने इच्छा नै छ। मलाई त खालि एउटा परमात्माको मात्र खाँचो छ। यदि यस्तो धारणा भयो भने पारि उत्रिन्छ। अरु कुनै कुरा गर्ने र जान्ने आवश्यकता नै छैन। मात्र दृढतापूर्वक मान, तिमीलाई परमात्माको प्रप्ति हुन्छ, पूर्णता आउँछ र कुनै कुराको पनि कमी हुँदैन। खालि मानिदिनाले सबै काम हुन्छ।

यदि स्वयम् आफूलाई नै राम्रोसँग जान्यौ भने जान्ने काम पूरा हुन्छ। आफूलाई राम्ररी जाने मात्रै तिम्रा समस्याको समाधान हुन्छ। आफूलाई नचिनि–नजानिकन पृथ्वी, स्वर्ग, नर्क र पाताल आदिका जति नै कुरा सिके–जाने पनि जान्ने कुरा चाहिँ बाँकी नै रहन्छ।

यसैगरी जहिले सम्म तिमी आफ्नो लागि गर्दछौ, त्यसबेलासम्म चाहे जतिसुकै गर, गर्दागर्दै ब्रह्मलोकसम्म पुग, तर गर्ने काम बाँकी नै रहन्छ। खालि अर्काका लागि गर्‍यौ भने मात्र काम बाँकी रहँदैन।

भन्नुको तात्पर्य हो, तिमीले अर्काको निम्ति गर्नु छ, आफूलाई जान्नु छ र परमात्मालाई मान्नु छ। यी तीनमध्ये कुनै एकमा पनि दृढता भयो भने तीनै कुराको पूर्ति हुन्छ। तिमी चाहे गर, चाहे जान, चाहे मान। गर्ने कुरामा धेरै वेग छ भने गर, जान्ने कुरामा धेरै जिज्ञासा छ भने जान र मान्ने बानी धेरै छ भने मान। कुनै एउटा कुरामा दृढ भएर लाग्यौ भने तिमीले गर्न, जान्न र मान्न केही पनि बाँकी रहनेछैन।

अर्काका लागि गर्नु कर्मयोग हो, आफूलाई जान्नु ज्ञानयोग हो र परमात्मालाई मान्नु भक्तियोग हो। यीमध्ये कुनै एउटा मात्रै पूरा भयो भने पनि तीनै ओटा पूरा हुन्छन्। जब गर्ने, जान्ने र पाउने कुरा बाकीँ रहन्न, अनि मात्र मनुष्यजीवन सफल हुन्छ।



# प्रतिकूल परिस्थितिबाट फाइदा

मानव शरीरलाई सबैभन्दा उत्तम शरीर माानिएको छ—'**लब्ध्वा सुदुर्लभमिदं बहु सम्भवान्ते**' (श्रीमद्भा० ११।९।२९) अकारण करुणा गर्ने प्रभुले हामीमाथि करुणा गरेर यो मनुष्य शरीर दिनुहुन्छ—

**कबहुक करि करुना नर देही। देत ईस बिनु हेतु सनेही॥**

(मानस उत्तर० ४४।३)

भगवान्‌ले हामीलाई जसरी यो मनुष्य शरीर दिनुभएको छ, ठीक त्यसरी नै यो परिस्थिति पनि दिनुभएको छ। यी दुवैकुरा उहाँले हामीलाई कृपापूर्वक नै दिनुभएको छ। हाम्रा कर्महरू असल होऊन् कि कमसल, जस्तोसुकै कर्म हामीले गरेका छौँ, तिनका फलको विधान गर्ने हाम्रा परमसुहृद् उहाँ नै हुनुहुन्छ—'**सुहृदं सर्वभूतानाम्**' (गीता ५।२९।)

सांसारिक दृष्टिले परिस्थिति दुई किसिमका हुन्छन्—सुख दिने र दुखदिने। परन्तु पारमार्थिक दृष्टिले भने परिस्थिति एउटै हुन्छ॥ परमात्माको प्राप्ति चाहनेहरूलाई परिस्थिति दुई किसिमका हुँदैनन्। भगवान्‌ले आफ्नो प्राप्तिका लागि हामीहरूलाई मानवशरीर दिनुभएको छ भने जुन परिस्थिति उहाँले दिनुभएको छ, त्यो पनि आफ्नै प्राप्तिका लागि दिनुभएको छ। त्यसै हुनाले चाहे हाम्रो अनुकूलभन्दा पनि अनुकूल परिस्थिति होस्,चाहे प्रतिकूलभन्दा पनि प्रतिकूल, चाहे अनुकूल र प्रतिकूल दुवै मिश्रित परिस्थिति होस्,त्यो परिस्थिति हाम्रो कल्याणका निमित्त नै प्राप्त भएको छ। जुनसुकै परिस्थिति हामीलाई प्राप्त छ, त्यो केवल भगवत्प्राप्तिको साधनस्वरूप हो—'**साधन धाम मोच्छ कर द्वारा**' (मानस उत्तर० ४३।४)

जो मानिस भोगी हुन्छ, उसैका दृष्टिमा परिस्थिति सुखदायी र दुखदायी दुई थरी हुन्छन् । योगीका दृष्टिमा त परिस्थिति दुई किसिमको हुँदैहुँदैन। कल्याणका लागि त अनुकूल परिस्थितिभन्दा प्रतिकूल परिस्थिति नै धेरै राम्रो छ। राम्रो किन छ भने परिस्थिति अनुकूल हुँदा व्यक्तिको संसारमा राग भएको हन्छ र ऊ त्यसमा फँस्ने सम्भावना रहन्छ। परन्तु प्रतिकूलतामा भने संसारमा फँस्ने सम्भावना हुँदैन। त्यसबेला

खालि परमात्मातिरै लाग्ने मुख्यता हुन्छ। साधकहरूका लागि दुवै कुरा मुख्यछन्—संसारबाट अलग हुनु र परमात्मासँग जोडिनु। अनुकूल परिस्थितिमा हामी संसारसँग टाँसिन्छौँ। त्यसैहुनाले हामीलाई संसारसँग छुट्टिन साह्रै नै गाह्रो हुन्छ, तर प्रकूिल परिस्थितिमा संसारबाट छुट्टिन त्यति गाह्रो हुँदैन। प्रतिकूल परिस्थितिमा साधकको आधा काम त त्यसै भइहाल्छ।

प्रतिकूल परिस्थिति परमात्माको प्राप्तिमा मुख्य साधन हो। हामीलाई प्रतिकूलता मन पर्दैन भने हामी असल साधक भएनौँ। हामी असली साधक त्यसैबेला हुन्छौँ, जहिले हामीलाई लाग्छ—मेरा प्रभुले पठाएको यो प्रतिकूल अवस्था मेरा लागि मङ्गलमय छ। यो एकदमै पक्का सिद्धान्तको कुरा हो। शास्त्रमा भनिएको छ—

**लालने ताडने मातुर्नाकारुण्यं तथार्भके।**
**तद्वदेव महेशस्य नियन्तुर्गुण-दोषयोः॥**

आफ्ना छोराछोरीलाई माया गर्ने र हप्काउने दुवै कुरामा कतै कहीँ पनि आमाको निष्ठुरीपन हुँदैन, त्यसरी नै जीवका गुण-दोषको नियन्त्रण गर्ने परमेश्वरको कहिल्यै पनि कसैमाथि निर्दयता हुँदैन। आफ्ना छोराछोरीलाई मायागर्दा र कहिले काहीँ परिस्थितिवश थप्पड लाउँदा पनि आमाको हृदय दुई किसिमको हुँदैन। आमामा निर्दयता देखिँदैन। निर्दयता देखिँदैन मात्र होइन, बरु थप्पड लाउने बेला उनीहरूमाथि आमाको विशेष कृपा हुन्छ। कुनै आमाका मनमा केटाकेटीहरूप्रति स्नेहको भाव उर्ल्यो भने उनले खेल्न जम्मा भएका ती सबै केटाकेटीहरूलाई खानेकुरा बाँड्लिन्। तर, त्यहाँ उद्दण्डता गर्ने सबै बालकहरूलाई उनले पिट्दिनन्। जो बालक आफ्नो हो, उसैलाई हप्काउने थप्पड लाउने गर्दछिन्।

यसैगरी भगवान्ले पनि अनुकूल परिस्थिति त सबैलाई दिनुहुन्छ, तर प्रतिकूल परिस्थिति भने उसैलाई दिनुहुन्छ, जसमाथि उहाँको विशेष अनुग्रह हुन्छ र आफ्नोपन हुन्छ। अतः मनुष्यको प्रतिकूल परिस्थितिमा नै भगवान्को विशेष कृपा हुन्छ। हाम्रा पापको नाश हुन्छ। अनि हाम्रो जीवनमा विकास हुन्छ। यस संसारमा जति पनि असल र महापुरुषहरू

भएका छन्, तिनको जीवन प्रायः प्रतिकूल अवस्थामा नै विकास भएको छ। धेरै थोरै मात्र यस्ता सन्तहरू छन्, जसले अनुकूल परिस्थितिमा उन्नति गर्न सकेका छन्।

हेर, एउटा प्रत्यक्ष कुरा भन्छु—यदि संसारमा कुनै जीव-जन्तु अथवा मनुष्यले दुःख पायो भने त्यसको दुःख हटाउन उसलाई असल मानिसले सहयोग गर्छन्। तर यदि कुनै भोगलिप्त मानिसले दुःख पायो भने त्यसमाथि कुनै असल व्यक्तिको सहयोग र सहानुभूति हुँदैन। त्यस्ता मानिस सँग ठूला सन्तहरूले त सहानुभूति राख्लान्, तर सबै मानिस त्यसलाई देखेर प्रसन्न हुँदैनन्।

कुनै मोटर चढेको सुखी व्यक्ति देख्दा पैदल हिड्नेहरूलाई डाह र ईष्या हुने गर्दछ। तिनीहरू उसका सहयोगी हुँदैनन्, बरु विरोधी हुन्छन्। जसरी सामान्य मानिसहरू त्यसको सुखमा सहयोगी हुँदैनन्, त्यस्तै भगवान्‌को पनि उसप्रति अलिकति उपेक्षाभाव रहन्छ।

जस्तो कुनै बालक सुखी छ, आनन्दित छ, मस्त खेलिरहेको छ भने आमाको त्यसप्रति केही उपेक्षाभाव रहन्छ। यदि त्यही बालक दुःखी हुन्छ भने आमाको त्यसप्रति विशेष स्नेहदृष्टि रहन्छ। यसरी मनुष्यको दुःखद परिस्थितिमा पनि भगवान्‌को विशेष कृपा रहन्छ।

जसरी तिमीहरूको सहयोग दुःखीहरूमा विशेष रहन्छ। भगवान्‌को सहयोग पनि दुःखीमाथि विशेष रहने गर्दछ। दुःख परेको बेला साधकले विशेष धैर्य र सावधानी राख्यो भने त्यसको उन्नति हुन्छ। तर, दुःख पाएँ भनेर रुने-कराउने मात्र गर्न थाल्यो भने उसको विकास हुँदैन।

एउटा अन्दाजी पाँच-सात वर्षको बालक थियो। त्यसका बाबु आमा दुवै मरे। अहिले त्यो तीस वर्षको भयो। ऊ सँगसगैँ एउटा अर्को पनि बालक थियो। त्यो पनि अहिले तीस वर्षकै भयो। यसका भने बाबु-आमा हजुरबा-हजुरआमा र दाजु पनि छन्। यी दुईमध्ये कुन चाहिँ धेरै चलाख होला?

जसका आमा-बाबु छैनन्, त्यही नै चलाख होला, किनभने दुःखका अवस्थामा हाम्रो जति चाँडो उन्नति हुन्छ, त्यति सुखको अवस्थामा हुँदैन। दुःखमा मानिसको नयाँ विकास हुन्छ। यसबाट के सिद्ध भयो? जुन यो

दुःखको परिस्थिति भगवान्ले हामीलाई दिनुभएको छ, त्यो त हाम्रो कल्याणका लागि दिनुभएको छ, उद्धारका लागि दिनुभएको छ।

जब हामी भोग भोग्द छौँ, त्यसबेला हाम्रो बुद्धि मन्द हुन्छ, त्यो विकसित हुँदैन। सुखमा धेरै गलफती हुन्छ। शरीरले धेरै आराम पायो भने निद्रा लाग्न थाल्दछ। दुःखमा नीद पनि आउँदैन, गलफती पनि हुँदैन। प्रतिकूल परिस्थितिमा हामीले साधना गर्‍यौं भने हाम्रो साधना तीव्रगतिमा अगाडि बढ्दछ, किनभने यस स्थितिमा हाम्रा पापको नाश हुन्छ र प्रभुको र सन्त-महात्माहरूको समेत विशेषरूपले सहयोग हामीलाई प्राप्त हुन्छ।

दुःखमा मनुष्य सावधान हुन्छ। सुखमा त्यो सावधान हुँदैन। सुखका बेला मानिस हर्षित हुन्छ, त्यसैहुनाले त्यसमा घमण्ड चढ्न थाल्छ, अनि त्यसले धर्मको उल्लङ्घन गर्दछ—**हृष्टो दृप्यति, दृप्तो धर्मादतिक्रामति।**

परन्तु दुःखी मानिसले धर्मको अतिक्रमण गर्दैन, जो ठूलाठूला धनी व्यक्ति छन्, तिनका घरमा कुनै साधु जान सक्दैन, कुनै भिखारी पस्न सक्दैन, किनभने त्यहाँ पहरादार मानिसहरू लट्ठी लिएर पहरामा बसेका हुन्छन्। तिनले अगाडि जान दिदैँनन्। गरिबका घरमा भने हरेक साधु जान सक्दछ र त्यहाँ उसले भोजन-भिक्षा पनि पाउँछ।

गरिब मानिसका मनमा हुन्छ ! कहाँ मेरो भलो हुन्छ, कहाँ मलाई आशीर्वाद प्राप्त हुन्छ?' के ठेगान! यस्तै कुनै भावले उसले गरिब र दुखीलाई दान दिन्छ। परन्तु धनी मानिसमा यस्तो कुरा हुँदैन। उसले त सोझै भनिदिन्छ—हैन हैन, मैले दिन्न, जाऊ यहाँबाट।

त्यसैहुनाले सुखी मानिसबाट धेरै राम्रो काम हुँदैन किनभने त्यो त निरन्तर सुखभोगमा नै लागिरहेको हुन्छ। दुखी व्यक्ति भोगहरूमा फँस्दैन, ऊ शान्त रहन्छ, त्यो अर्काका लागि, आफ्ना लागि र भगवान्का लागि पनि ठीक हुन्छ। भगवान् र जनता सबै उसका लागि पनि ठीक हुन्छन्। त्यसैहुनाले दुःखदायी परिस्थिति आइपरे पनि साधकमा प्रसन्नता हुनुपर्दछ, आनन्द आउनुपर्दछ, र भगवान्ले ठूलो कृपा गरेर मलाई यस्तो मौका दिनुभएको छ भनेर उसले खुसी हुनुपर्दछ।

यस कुरालाई कुन्तीले बुझेकी थिइन्। त्यसैकारण उनले भगवान्

सँग विपत्ति मागिन्। उनले भनिन्—'हे नाथ! मलाई सधैँभरि विपत्ति नै मिलिरहोस्'—'**विपदः सन्तु नः शश्वत् तत्र तत्र जगद्गुरो?**' (श्रीमदभाग० ११८।२५) रन्तिदेवले भने—जति पनि दुःखी व्यक्ति छन्, तिनका सबै दुःख मैले भोगूँ र तिनीहरू सबै दुःखबाट मुक्त होऊन्—'**आर्त्ति प्रपद्येऽखिलदेहभाजामन्तःस्थितो येन भवन्त्यदुःखाः।**' (श्रीमदभाग० ९।२१।१२) कस्तो विलक्षण कुरा भनेका छन्। सबैका दुःखकष्ट मैले नै भोगूँ भन्नु मामूली कुरा होइन। यो त साह्रै नै माथिल्लो दृष्टि हो।

सुखका सामग्रीहरू स्वयं भोग्नका लागि होइनन्। यी त अर्काको कल्याण र सहायता गर्नका लागि हुन्। यो शरीर सुखभोगका लागि पाइएकै होइन—'***एहि तन कर फल विषय न भाई।***' (मानस, उत्तर० ४४।१) यो शरीर त हामीलाई अगाडि उन्नति गर्नका लागि दिइएको हो। मानव सदाका लागि सुखी बनोस्, उसको दुःख सदाका लागि समाप्त होस्। यसका लागि नै यो मनुष्य शरीर उसलाई दिइएको हो।

श्रोता—सुखमा सबै साथी हुन्छन् तर दुःखमा हुँदैनन्, किन?

स्वामीजी—जो भोगी हुन्छन्, ती दुःखमा साथी हुँदैनन्,। परन्तु जो सज्जन पुरुष हुन्छन्, तिनले त दुःखीहरूमाथि विशेष कृपा गर्दछन्। दुखीको सहयोग गर्दछन्, जो केवल सुखका साथी हुन्छन्, ती भोगी हुन्छन्। तिनीहरू उसबाट सुख चाहन्छन्, तर उसको भलो चाहदैँनन्। सुखीको साथ दिनेहरू ठग हुन्छन्, धोका दिने हुन्छन्, त्यो सुख मलाई मिलोस् भन्दै तिनीहरू स्वयम् उसको सुख लुट्न चाहन्छन्,। सज्जन पुरुष भने अर्काको हित मात्र गर्न चाहन्छन्।

**गच्छतः स्खलनं क्वापि भवत्येव प्रमादतः।**
**हसन्ति दुर्जनास्तत्र समादधति सज्जनाः॥**

हिँड्दा हिँडदै कुनै लड्यो र उसलाई चोट-पटक लाग्यो भने दुष्टहरू हाँस्छन्, तर सज्जन मानिसले भन्छन्—भाइ! कहाँ चोट लाग्यो? तिमीलाई कहाँ जानु छ? म तिमीलाई पुर्‍याइ दिऊँ? अतः दुःखदायी परिस्थितिमा हामीलाई सज्जन पुरुषहरूको विशेष सहयोग मिल्दछ र हाम्रो धेरै उन्नति हुन्छ।



# स्वाधीनताको रहस्य

यो मानवशरीर परमात्माको प्राप्तिका लागि नै मिलेको हो। उसका सामु जुनसुकै परिस्थिति आउँछ, त्यो सबै त्यस परमात्मप्राप्तिको लागि साधन-सामग्री हो। त्यसैको सदुपयोग गर्न सके परमात्माको प्राप्ति भइहाल्छ। मानिसका मनमा सधैँ यो भावना हुन्छ—मेरो यो अहिलेको परिस्थिति बदलियोस्। शरीर स्वस्थ नभए स्वस्थ होस्, धन नभए धनी बनूँ। यस्तो परिस्थिति आओस् अनि म भगवान्को भजन गरूँ।

वास्तवमा पमात्माको प्राप्तिका लागि परिस्थिति फेरिनु आवश्यक नै छैन। तिमी अहिले जस्तो स्थितिमा छौ, त्यसै स्थितिमा परमात्माको प्राप्ति हुन्छ। सांसारिक वस्तुहरूको प्राप्तिका लागि अलग-अलग स्थिति, भिन्न-भिन्न योग्यता, तथा विभिन्न परिस्थिति आदिको आवश्यकता पर्दछ। तर, परमात्माको प्राप्तिमा यो कुरा लागु हुँदैँन। यसमा त अहिले तिम्रो जे योग्यता छ, जुन स्थिति छ, जस्तो परिस्थिति छ, त्यसैमा परमात्माको प्राप्ति हुन सक्दछ। कति विलक्षण कुरा छ यो! मात्र मैले केवल परमात्माको प्राप्ति गर्नु छ भन्ने तिम्रो मनमा दृढ इच्छा चाहियो। यो इच्छा यति प्रबल हुनुपर्दछ कि यसबाहेक अरु सबै इच्छाहरू नष्ट होऊन्। भगवान्का लागि यसो भनिएको छ—

**'न त्वत्समस्त्वभ्यधिकः कुतोऽन्यः'** (गीता ११।४३) तपाईंको बराबरी पनि कुनै छैन भने तपाईंभन्दा श्रेष्ठ कसरी होला! त्यसैहुनाले परमात्मा सर्वोपरि हुनुहुन्छ। अतः उहाँलाई प्राप्त गर्ने इच्छा पनि सर्वोपरि हुनुपर्दछ।

परमात्मालाई पाउने एउटै मात्र उत्कट अभिलाषा होस्। यसबाहेक म बाँचिरहूँ, निरोग रहूँ, धनी बनूँ, योग्य होऊँ, लोकले मलाई राम्रो मानून्, मेरो महिमा गाऊन्, मेरो कदर गरून्जस्ता कुनै पनि इच्छा मनमा नहोस्। आफूमा योग्यता, विद्या आदि केही नभए पनि परमात्माको प्राप्ति हुन सक्दछ। मलाई यस कुराको स्पष्ट आभास हुन्छ।

लोकमा जति पनि भिन्नता छ, त्यो सबै सांसारिक दृष्टिले मात्र छ।

कुनै योग्य छ, कुनै अयोग्य छ, कुनै विद्वान् छ, कुनै मूर्ख छ, कुनै धनवान् छ, कुनै निर्धन छ, कुनै चलाख छ, कुनै सोझो छ। संसारिक दृष्टिले हेर्दा यो भिन्नता त रहन्छ नै, परन्तु संसारको त्याग र परमात्माको प्राप्ति गर्नु छ भने त यस्तो विभेद रहँदैन।

संसारको जस्तोसुकै अवस्था र परिस्थिति किन नहोस्, त्यसलाई मनले त्याग गर्नु छ, त्यस परिस्थिति र अवस्थाबाट आफू माथि उठ्नु छ, त्यससँग आफ्नो कुनै पनि सम्बन्ध गाँस्नु वा राख्नु छैन। यदि त्याग्नु नै छ भने त्यो असल होस् कि कमसल, त्यससँग हाम्रो के सम्बन्ध!

कुनै विद्वान् छ, कुनै मूर्ख छ, कुनै धनवान् छ, कुनै निर्धन छ, कुनै योग्य छ, कुनै अयोग्य छ, यो अवस्था संसारको हो। संसारबाट विमुख हुनु छ भने त विद्वत्ता, धनवत्ता आदिलाई पनि छोड्नु नै छ र मूर्खता निर्धनता आदिलाई पनि छोड्नै छ, किनभने परमात्माको प्राप्ति संसारद्वारा हुँदैन। बरु यसको उल्टो संसारको त्यागबाट हुन्छ। संसारका योग्यता आदि त सीमित हुन्छन्, तर त्याग सीमित हुदैँन। त्याग असीम हुन्छ। यसबाट असीम परमात्माको प्राप्ति हुन्छ। त्यसै हुनाले सांसारिक वस्तुहरूको जो आधार छ र अन्तःकरणमा त्यसको जुन महत्त्व छ, त्यसैलाई हामीले त्याग्नु छ।

स्वरूपले संसारको त्याग कसैले गर्न सक्दैन र त्यसो गरेर मुक्ति पनि मिल्दैन। संसार त्यागेर मात्रै मुक्ति पाइने भए संसार छाडेर मर्नेहरू सबै मुक्त हुने थिए किनभने तिनीहरुले शरीर, धन, परिवार, सबैलाई छोडेरै जान्छन्। गएपछि पनि कुनै चिठी, टेलिफोन, ईमेल, समाचार केही पनि पठाउँदैनन्, यति ठूलो त्याग गर्छन्। परन्तु यस्तो बाहिरी त्यागबाट मुक्ति हुँदैन। त्याग त भित्रको हुनुपर्दछ। हामीभित्र जुन राग, आसक्ति, प्रियता, महत्ता आदि छन्, तिनै वास्तवमा बन्धनका कारण हुन्।—'**कारणं गुणसंयोगो सदसद्योनिजन्मसु**।' (गीता १३। २१) जब भित्रैबाट सम्बन्ध बिच्छेद गर्नु छ भने त्यो वस्तु राम्रो होस् वा नराम्रो, थोरै होस् वा धेरै, यस्ता कुराले के फरक पर्छ र!२१

श्रोता—भगवान्‌ले नै यो संसार बनाउनुभयो भने किन फेरि यत्रो मायाजाल आफैँ रच्नुभयो ?

स्वामीजी—हेर, मानिसहरू भगवान्‌को मायाले हामीलाई फँसाइदियो, भन्छन् नि ! वास्तवमा हेर्ने हो भने भगवान्‌को मायाले हामीलाई फँसाएको हैन, उल्टो भगवान्‌को मयालाई नै हामी आफैँले मानेको हो। यो बेइमानीले हामीलाई फँसाएको हो। जुन प्राणी तथा पदार्थलाई हामीले आफ्नो ठान्दछौँ, तिनैमा हामीहरू आफैँ फँस्द छौँ। जुनलाई हामी आफ्नो ठान्दैनौँ, तिनमा हामी फँस्दैनौँ।

श्रोता—तपाईंले भगवान्‌ले सबैको कल्याण चाहनुहुन्छ भन्नुभयो ?

स्वामीजी—चाहनु त हुन्छ, तर उहाँ जबर्जस्ती भने गर्नुहुँदैन। जो ठूला-बडा हुन्छन् तिनीहरू कुनै कुरामा पनि जबर्जस्ती गर्दैनन्। भगवान् ठूला-बडाका पनि मालिक हुनुहुन्छ, उहाँले जबर्जस्ती किन गर्नुहुन्छ र ?

जस्तो मैले भन्छु,जस्तो म चाहन्छु अर्कोले पनि त्यस्तै गरोस् ! यो भावना त पशुहरूमा पनि छ। असल मानिसमा यो कुरा हुँदैन। असल मानिस त तिमीले आग्रह गरेपछि, अनुरोध गरेपछि, मात्रै ठूला बन्दछन्, गुरु बन्दछन्। म नै सबैको गुरु बनूँ भन्ने भावना तिनीहरूमा हुँदैन। म आफ्नो इच्छानुसार अर्काबाट कार्य गराउँछु भन्नु राम्रो कुरा होइन। साह्रै तल्लो तहको कुरा हो। भगवान् श्रीरामले प्रजालाई स्पष्टरूपमा उपदेश दिनुभएको छ—मैले यदि केही अनुचित कुरा भनेँ भने तिमीहरूले निडर भएर मलाई रोक्नू—

***जौं अनीति कुछ भाषौं भाई। तौ मोहि बरजहु भय बिसराई॥***

(मानस उत्तर० ४३।३)

यसको तात्पर्य म जसो भन्छु त्यसै गर भन्ने होइन, तिमीलाई जे राम्रो लग्छ, त्यही गर भन्ने हो। भगवान्‌ले कसैसँग जबर्जस्ती गर्नुहुँदैन।

तिमीलाई अस्पतालमा अपरेसन गराउनु छ भने सबैभन्दा पहिले म मरे भने पनि कुनै आपत्ति छैन भनेर डाक्टरलाई लेखेर दिनुपर्दछ अनि बल्ल उसले अपरेसन गर्छ। कसैसँग कुनै काम गराउनु छ भने पनि उसलाई पूरा अधिकार दिनुपर्छ। अधिकार दिनु आफ्नो हातको कुरा हो, तर अधिकार

लिनु आफ्नो हातको कुरा होइन। त्यसैहुनाले भगवान् कसैको अधिकार लिनुहुँदैन। उहाँ अर्जुनका घोडा हाँक्नुहुन्छ, उनका आज्ञाको पालन गर्नुहुन्छ—**'सेनयोरुभयोर्मध्ये स्थापयित्वा रथोत्तमम्।'** (गीता १।२४)

उहाँ आफैँ कसैलाई शरणमा लिनुहुन्न, तर उसलाई शरणमा आउन भन्नुहुन्छ—**'मामेकं शरणं व्रज।'** (गीता १८।६६) शरणमा लिनु भगवान्‌को काम होइन। भगवान् सबैलाई स्वतन्त्रता दिनुहुन्छ। उदार त्यही हुन्छ, जो सबैलाई स्वतन्त्रता दिन्छ र कसैमाथि पनि आफनो अधिकार प्रदर्शन गर्दैन। जसले अर्कामाथि अधिकार प्रदर्शन गर्दछ, त्यो तल्लो तहको मानिस हुन्छ। परन्तु आज भोलि व्यक्तिको बुद्धि उल्टो भएको छ, ऊ कसैमाथि आफ्नो अधिकार प्रदर्शन गर्न पाउँदा आफूलाई ठूलो भएको ठान्दछ। अरुले मैले भनेको माने भने म महान् हुन्छु, भन्ने ठान्दछ।

वस्तुत: तिमीले भनेको मान्दा तिमी आफैँ नोकर हुन्छौ, ठूला हुँदैनौ। भनेको मान्ने मालिक हुन्छ र भनेको मान्न लगाउने नोकर हुन्छ। जसले नोकरी गराउन चाहँदैन र कुनै व्यक्ति मेरो अधीनमा होस् भन्ने चाहँदैन, त्यस्ताको पनि यदि कसैले भनेको मान्छ र उसको अनुकूल व्यवहार गर्दछ भने उसले पनि त्यसको नोकर बन्नुपर्दछ। भगवान्‌को आज्ञानुसार हिँड्ने भक्त भगवान्‌को मुकुटमणि हुन्छ। भगवान् भन्नुहुन्छ—***'भगत मेरे मुकटमणि।'*** **'अहं भक्तपराधीनः'** (श्रीमद्भा० ९।४।६३)

कुनै नोकरले मालिकले भनेअनुसार काम गर्दछ भने समय आउँदा मालिकले पनि उसले भनेको मान्नुपर्दछ। त्यसैहुनाले जसले अरुलाई अधीनमा राख्छ, त्यसले परतन्त्रता भोग्नैपर्छ, यस्तो नियम छ।

अर्काले मैले भनेको मानोस्, मैले भनेअनुसार हिँडोस्, मेरो इच्छा मुताबिक गरोस्, मैले जस्तो चाहन्छु त्यस्तै बनोस्, यसैको नाम कामना हो। आफूले भनेअनुसार गराउनु नै कामना हो। कामना हुने व्यक्तिलाई कहिल्यै शान्ति हुँदैन—**'तद्वत्कामा यं प्रविशन्ति सर्वे स शान्तिमाप्नोति न कामकामी।'** (गीता २।७०) कामनाको त्याग गर्नासाथ तत्कालै शान्ति मिल्दछ—**'त्यागाच्छान्तिरनन्तरम्।'** (गीता १२।१२)

परन्तु आज कुरा उल्टो हुँदै छ। मानिस आजभोलि मनमा शान्ति पनि चाहन्छ र स्वास्नीले मैले भनेको मानोस्, छोराले मैले भनेजस्तै गरून्, आमा-बाबुले मैले भनेको मानून्, गुरुले पनि मैले चाहेजस्तै गरून्, यतिमात्र होइन, भगवान्ले पनि मैले नै चाहेजस्तो गरून् म उनको भक्त हुँ त्यसकारण भगवान्ले पनि मैले भनेको जस्तो गर्नैपर्छ, भन्दछन। एकपल्ट नारदजीले पनि यसै भनेका थिए—***'करहुँ सो बेगि दास मैं तोरा।'*** (मानस बाल० १३२।४) म तपाईंको दास हुँ। मेरो काम चाँडै होस्।

सबै चाहन्छन्—अरुले मैले भनेजस्तो गरून्। अब उसले भनेको जस्तो गर्ने कसले? एउटाले भन्छ—त्यसले मैले भनेजस्तो गरोस्। अर्कोले पनि भन्छ—उसले मैले भनेजस्तो गरोस्। वास्तवमा ती दुवै ठग हुन्। दुवै जना  ठग भए भने ठगी हुँदैन। श्रेष्ठ र शूर-वीर पुरुष त तिनै हुन्, जो अर्काले भनेअनुसार गर्दछन्। मैले अरु सबैले चाहेअनुसार गरूँ! यिनीहरू जसरी चाहन्छन् त्यसरी नै गरूँ!' भन्नु त श्रेष्ठपुरुषको लक्षण हो। भगवान् सबैभन्दा श्रेष्ठ हुनुहुन्छ भने उहाँले तँ यसो गर्! तँ उसो गर्! भनेर किन भन्नुहुन्छ र?

कुनै राम्रो कुरा छ भने त्यसलाई हामी अर्काबाट गराउन किन चाहन्छौँ? अर्काले राम्रो गर्न चाहँदैन र? त्यस कुरालाई हामी अर्काका सामु राखिदिउँ र भनौँ—तिमीलाई राम्रो लागे गर! नत्र नगर! भगवान्ले पनि यसै भन्नुभएको छ—***'सुनहु करहु जो तुम्हहि सोहाई'*** (मानस, उत्तर० ४३।२) उसले गरोस् वा नगरोस् यस्तोमा हामी समभावमा रहनुपर्दछ—**'सिद्ध्यसिद्ध्योः समो भूत्वा'**, (गीता २।४८)

राम्राभन्दा राम्रा कुरा अरुका अगाडि राखिदिनु हाम्रो काम हो। अरुबाट गराउनु हाम्रो काम होइन। अर्काबाट गराउने सोच राख्यौँ भने त हामीले उसकै अधीन हुनुपर्दछ, अर्थात् पराधीन बन्नुपर्दछ। त्यसलाई यो कुरा थाहा होस् कि नहोस्। उसले आफूले भने जस्तो गर्‍यो भने पनि राम्रो! हैन, गरेन भने झन् राम्रो! होइन त?

उसले मैले भनेजस्तो गर्‍यो भने मैले उसको अधीन हुनुपर्दछ,। मैले

भनेजस्तो गर्दैन नै भने त त्यसबाट आफूलाई झन् छुटकारा भयो। आफू उसबाट बाँधिनु परेन। जसले कहिल्यै पनि कसैलाई केही भन्दैनन् र चाहँदैनन् पनि, यस्ता सन्त महात्मा, विरक्त, त्यागी एवम् जीवन्मुक्त महापुरुषहरूका मनको अनुकूल कुनै व्यक्ति हिँड्छ भने तिनीहरूलाई पनि त्यससँग बाँधिनुपर्दछ, त्यसका अधीन हुनुपर्दछ। भगवान् र उनका प्यारा भक्तहरू आफूलाई अर्काको अधीन राख्दैनन्। यसको अर्थ उनीहरू अर्काको दासत्वबाट भयभीत हुन्छन् वा मलाई उनको अधीन हुनुपर्दछ भनेर अर्कालाई आज्ञा–उपदेश गर्दैनन् भनेको चाहिँ होइन।

भक्तहरू यस कारण अरुलाई आज्ञा–उपदेश गर्दैनन् किनकि उसले त्यो आज्ञा–उपदेश मान्योभने उसको पतन हुन्छ, किनभने भक्तहरू अर्काबाट केही चाहँदैनन्। खालि उसमाथिको दयाभावले उसका हितका कुरा गर्दछन्। धेरै मानिसहरू भन्छन्—जो भक्ति गर्दछ, उससँग भगवान् डराउँछन् किनभने उनलाई भक्तको अधीनमा रहनुपर्दछ। यो कुरा होइन, भगवान्‌लाई त आफ्ना भक्तजनको अधीन हुनुमा तथा भक्तको काम गर्नुमा आनन्द नै आउँछ।

वृन्दावनमा एकजना भक्त थिए। उनलाई बिहारीजीको दर्शन प्राप्त भएन। अरु मानिसहरू भन्दथे—एः बिहारीजी त सामुन्नेमै उभिनुभएको छ। तर उनले भन्छन्—भाइ? मलाई त उहाँ देखिनुहुँदैन।

यसैगरी तीन दिन बिते, तर दर्शन मिलेन। ती भक्तले यस्तो विचार गरे—सबैलाई बिहारीजीको दर्शन हुन्छ, मलाई हुँदैन। म साह्रै पापी रहेछु,। त्यसै भएर ठाकुरजीले मलाई दर्शन दिनुहुँदैन। अतः मैले यमुनाजीमा गएर डुबेर मर्नुपर्दछ।

मनमा यस्तो विचार गरेर ती भक्त रातीको समयमा यमुनाजी तिर लागे। त्यहाँ यमुनाजीको किनारमा एकजना कुष्ठ रोग भएको मानिस सुतेको थियो। त्यसलाई भगवान्‌ले सपनामा भन्नुभएको थियो—अहिले यहाँ जो मानिस आउँछ, तिमीले त्यसको गोडा समात्नु। उसका कृपाले तिम्रो कुष्ठरोग निको हुन्छ। कुष्ठरोगी अब निद्राबाट ब्युँझ्यो। त्यो उठेर

थपक्क बस्यो। जसै ती भक्त त्यहाँ आए, कुष्ठरोगीले उत्तिखेरै तिनको खुट्टा समात्यो र भन्यो—मेरो कुष्ठरोग सञ्चो गराइदिनोस्!

भक्तले भने—एः भाइ? म त साह्रै पापी छु। मलाई त ठाकुरजीले दर्शन सम्म पनि दिनुहुँदैंन। मैले तपाइँको रोग कसरी निको पारौँ? उनले धेरै भने तर कुष्ठरोगीले उनका पाउ छोड्दै छोडेनन्। अन्त्यमा कुष्ठरोगीले भन्यो—त्यसोभए तपाईंले आफ्ना मुखले यत्तिमात्र भनिदिनोस्—तेरो कुष्ठरोग सञ्चो होस्।

अब भक्तले भने—कसरी भनूँ! कुष्ठरोग सञ्चो गराउने योग्यता मसँग छँदैछैन। कुष्ठरोगीले साह्रै आग्रह गरेपछि भक्तले भने—तिम्रो कुष्ठ रोग निको होस्! यति भन्न मात्र के भ्याएका थिए, तत्कालै उसको कुष्ठरोग निको भयो। अनि उसले सपनाको कुरा भक्तलाई सुनायो—भगवान्ले नै मलाई यसो गर्नू भनेर अह्राउनुभएको थियो। यो सुनेर भक्तले विचार गरे—अब म आज डुबेर मर्दिनँ। मनले यति भन्दै उनी त्यहाँबाट फर्किंदै थिए, त्यही नै उनलाई ठाकुरजीको दर्शन मिल्यो।

भक्तले ठाकुरजीलाई सोधे—प्रभो? मलाई पहिले किन दर्शन दिनुभएन?

ठाकुरजीले भन्नुभयो—तिमीले यत्रो उमेरसम्म मसँग केही पनि मागेनौ? त्यसैहुनाले म तिम्राअगाडि आफ्नो मुख देखाउनसम्म योग्य थिइनँ। अहिले तिमीले मलाई यसको कुष्ठरोग निको पारिदिनुस् भन्यौ, अनिमात्र म तिम्रासामु मुख देखाउने लायक भएँ। यसको तात्पर्य के हो भने—जसले केही पनि चाहँदैन, भगवान् उसका दास बन्नुहुन्छ।

हनुमान्जीले भगवान्को कार्य गरिदिनुभयो, भगवान् हनुमान्जीका दास अर्थात् ऋणी भइदिनुभयो—***'सुनु सुत तोहि उरिन मैं नाहीं'*** (मानस, सुन्दर० ३२।४)

सेवा गर्ने ठूलो हुन्छ। सेवा गराउने सानो हुन्छ, परन्तु भगवान् र उनका प्यारा भक्तहरूलाई सानो हुनुमा कुनै लाज हुँदैन। तिनीहरू जानी-जानी साना हुन्छन्। साना हुँदा पनि वास्तवमा तिनीहरू साना हुँदै हुँदैनन् र तिनमा ठुल्याईको अभिमान पनि कत्ति हुँदैन।



# कल्याण सहज छ

आफ्नो कल्याण गर्नु छ भने जति हामी जान्दछौँ, त्यसभन्दा धेरै जान्नु आवश्यक छैन। जति हामीलाई प्राप्त छ, त्यसभन्दा बुढी वस्तुको पनि आवश्यकता छैन। उत्पात मच्चाउनु छ भने, भोगमा फँस्नु छ भने, जन्म–मरणको चक्रमा रगडिनु छ भने त तिमीलाई धेरै वस्तुको खाँचो पर्दछ। तर, यदि तिमी वस्तुतः आफ्नो कल्याण चाहन्छौ भने त जेजति तिमीलाई प्राप्त छ, त्यत्ति नै तिमीलाई आवश्यक छ। जति तिम्रालागि आवश्यक छ, त्यत्ति नै तिमीलाई प्राप्त भएको छ। तिमीसँग आफ्नो कल्याणका लागि चाहिने ज्ञान पनि पूरा नै छ, कम छैन। त्यसैहुनाले तिमीले न आफ्नो ज्ञानमा वृद्धि गर्नु आवश्यक छ, न त वस्तुहरुको सङ्ग्रह नै बढाउनु आवश्यक छ। जति तिमीले पाएका छौ, त्यत्तिले तिमी आफ्नो कल्याण गर्न सक्दछौ। यस कुरामा अलिकति पनि शङ्का छैन।

यो शरीर र यो संसार पहिले पनि थिएन, पछि पनि रहँदैन। यसका साथै यी दुवै कुरासँग हाम्रो सम्बन्ध पहिले पनि थिएन र पछि पनि रहँदैन। यो कुरा सबैले जान्दछन्। त्यसैहुनाले तिमीले शरीर र संसारको भर गर्नु छैन, यिनको सहारा लिनु छैन। यसैगरी तिमीसँग अहिले जति वस्तु छन्, तिनकै सदुपयोग गर्नुपर्ने छ, तिनैद्वारा सबैको कल्याण गर्नुपर्ने छ। अतः धेरै जान्ने र धेरै वस्तुको सङ्ग्रह गर्ने आवश्यकता नै छैन।

भगवान्को कानुनमा कमी छैन। भगवान् जीवमात्रका सुहृद् अर्थात् हितैषी हुनुहुन्छ। उहाँले जीवहरूका कल्याणका लागि यो मनुष्य शरीर दिनुभयो। उहाँले तिनको कल्याणका लागि ज्ञानको कमी गर्नुभएको छैन र योग्यताको कमी पनि गर्नुभएको छैन। यदि यिनमा कमी गर्नुभएको भए मनुष्यशरीर कल्याणका लागि दिइएको हो भन्न मिल्ने थिएन।

कर्मको विधानअनुसार हेर्दा पनि जति वस्तुको तिमीलाई आवश्यकता छ, उति वस्तु मिलेकै छ र त्यतिले नै तिम्रो कल्याण हुन सक्दछ। धेरैको आश तिमीबाट कसले गर्छ र ? जे तिमी दिन सक्दैनौ, गर्न सक्दैनौ, त्यसको आश कसले गर्छ ? जति तिमी गर्न सक्दछौ, दिन सक्दछौ, त्यति नै गर्‍यौ दियौ भने पनि तिम्रो कल्याण हुन्छ। यस कुरामा सन्देह छैन।

ज्ञानका दृष्टिले हेर्ने हो भने हाम्रो सम्बन्ध कुनै वस्तुसँग छँदै छैन। यो ज्ञान सबैमा छ। जब सम्बन्ध नै छैन भने वस्तु धेरै वा थोरै भएर के भो? जति पनि उत्पन्न हुने र नष्ट हुने वस्तुहरू छन्, तिनीसँग हाम्रो सम्बन्ध पहिले भएकै थिएन, अहिले पनि भएको छैन, पछि पनि हुने छैन र कहिल्यै हुन सक्ने पनि छैन। यस कुराको राम्रो अनुभव भयो भने तिम्रो कल्याण हुन्छ र तत्त्वज्ञान पनि हुन्छ।

यसरी भक्तियोगका दृष्टिले परम सुहृद् भगवान्को विधान हुनाले हामीलाई कुनै कुराको कमी छैन। कर्मयोगका दृष्टिले हामीलाई जो प्राप्त छ, त्यही नै भरिपूर्ण छ। ज्ञानयोगका दृष्टिले क्रिया र पदार्थका साथमा हाम्रो सम्बन्ध नै छैन। त्यसैहुनाले हामीलाई नयाँ कुरा जान्ने नया वस्तुको सङ्ग्रह गर्ने कुनै पनि आवश्यकता छैन। आफ्नो कल्याणका लागि चाहिने समग्री हामीसँग पर्याप्त छ, समय पनि पूरापूर छ। समयका बारेमा म त भन्छु—मनुष्य जन्ममा हामीसँग समय यति धेरै छ कि त्यसको एउटा सानो अंश मात्रको सदुपयोगले पनि हाम्रो पूर्ण कल्याण हुन्छ।

परमात्मप्राप्तिको काम थोरै छ, तर समय भने साह्रै धेरै छ। हुन त एकपल्ट कल्याण गरेपछि फेरि दोहोर्‍याएर कल्याण गर्नुपर्दैन, गर्नुपर्‍यो भने पनि पाँच-सातपल्ट कल्याण गरोस् त्यतिसमय मनुष्यसँग छ।

सांसारिक वस्तु वा सामग्री पनि मनुष्यसँग पर्याप्त छ। जति धनसम्पत्ति उससँग छ, त्यो कहिल्यै पनि थोरै हुँदैन। बरु त्यो सबै यहीँ छाडेर मर्नुपर्दछ। यो उत्पन्न र विनष्ट हुने वस्तु पहिले पनि आफ्नो थिएन अहिले पनि आफ्नो छैन, पछि पनि आफ्नो हुँदैन र हुनै सक्दैन। यो बोध पनि आफूलाई छ।

हामीलाई समय, ज्ञान र पदार्थ कुनै कुराको अलिकति पनि कमी छैन। कमी छ भने खालि एउटा कुराको कमी छ। त्यो के भने—हामी आफ्नो कल्याण चाहँदैनौ। कल्याण त्यसबेला मात्र हुन्छ,जब हामी स्वयम् आफ्नो कल्याण चाहन्छौ र यसका लागि स्वयम् विचार गर्दछौँ। अर्काले भनेर कल्याण हुँदैन। अर्काले भनेर पनि त्यसबेला मात्र कल्याण हुन्छ,जतिबेला तिमीले उसले भनेको कुरा मान्दछौ। अर्थात् उसले भनेको कुरालाई यो मेरालागि हो भनेर तिमीले आत्मसात् गर्‍यौ भने मात्र त्यो तिम्रो कल्याणको काममा आउँछ।

तिमीमाथि जति जिम्मेवारी छ, त्यतिमात्रै पूरा गरिदियौ भने तिम्रो कल्याण हुन्छ। तिमी जतिजति बद्धिमान् हुन खोज्छौ, उतिउति तिम्रो जिम्मेवारी बढ्दै जान्छ। बुद्धि जति थोरै छ , जिम्मेवारी पनि त्यत्ति थोरै हुन्छ। ट्याक्स त आमदानी भएमा मात्रै लाग्ने हो। सङ्ग्रह गरेको वस्तुमा नै लाग्ने हो। वस्तु नै छैन भने केको सङ्ग्रह ? तिमी जति बढी जान्न खोज्छौ, जति धेरै जम्मा गर्न खोज्छौ, उति धेरै तिम्रो जिम्मेवारी वा उत्तरदायित्व बढ्दछ।

तिम्रो कल्याणका लागि धेरै वस्तुको आवश्यकता भएदेखि त भगवान्ले तिमीलाई धेरै नै दिनुहुन्थ्यो। धेरै ज्ञानको आवश्यकता भए त भगवान्ले उति ज्ञान दिनुहुन्थ्यो। दिनुहुन्थ्यो होइन, दिनुभएकै छ। भगवान्ले तिमीलाई धेरै धन–सम्पत्ति दिनुभएको छ। धेरै बुद्धि दिनुभएको छ। धेरै समय दिनुभएको छ। धेरै योग्यता दिनुभएको छ। धेरै बल दिनुभएको छ। भगवान्को भण्डार त अनन्त छ, अपार छ।

बालकको भरण–पोषणका लागि आमाको जति शक्ति छ, त्यो सबैका सबै बालककै लागि हो। त्यसरी नै हाम्रा प्रभुको जति शक्ति छ,त्यो पनि सबैका सबै हाम्रैलागि हो। सर्व समर्थ,अनन्त सामर्थ्य भएका, परम दयालु, परम उदार, परम कृपालु, हाम्रा परम सुहृद् प्रभुले प्राणीलाई उसको कल्याणका निम्ति यो मनुष्य शरीर दिनुभएको छ भने त्यसमा कमी के कुराको होला र ? यो कुरा स्वीकार गऱ्यौ भने मात्र तिम्रो अगाडिको बाटो बिलकुलै सफा र निष्कण्टक हुने छ। तर, चतुऱ्याईं र चलाखी चाहिँ त नगर्नू नि! सोझो र सरल भएर रहनू!–

***सरलसुभाव न मन कुटिलाई। जथा लाभ सन्तोष सदाई॥***

(मानस उत्तर० ४६।१)

तिमी जति सरल बन्दछौ, तिम्रो बाटो त्यतिकै ठीक र सरल हुन्छ। तिमी जति चतुऱ्याईं गर्छौ, बाटो त्यत्तिकै कठिन र जटिल हुदैँ जान्छ। त्यसैहुनाले जति गर्न सकिन्छ, उति नै गर्नु छ। जति जान्न सकिन्छ, उति नै जान्नु छ। जति मान्न सकिन्छ, उति नै मान्नु छ। धेरै गर्ने, धेरै जान्ने र धेरै मान्ने आवश्यकता नै छैन। हामीसँग जेजति छ, खालि त्यसैको सदुपयोग गर्नु छ।

